# ज्यापू जाति – एक अध्ययन

( लेख संकलन )



प्रकाशक :

ज्यासेस, काठमाडौं

# ज्यापू जाति – एक अध्ययन

## ( लेख संकलन )

संकलन :
*एकाराम*

प्रकाशक :
**ज्यासेस, काठमाडौं**

मूल्य– ७/-

ने. सं. ११११ कछलाथ्व
२०४७ कार्तिक

# प्रकाशकीय

नेपालको ऐतिहासिक, प्राकृतिक एवं संस्कृतिले भरिपूर्ण देश हो। यहाँका हरेक जातिको आ-आफ्ना किसिमका संस्कृति छन्। कुनै जातिको सभ्यता नै त्यस जातिको संस्कृतिबाट थाहा पाइन्छ। त्यसैले इतिहासको अध्ययनमा संस्कृति वा साँस्कृतिक गतिविधिले धेरै सहयोग पुऱ्याउँदछ, यदि त्यसले आफ्नो बिर्सि दिएन भने। यस्तै आफ्नै किसिमका संस्कृति बोकेका जाति मध्ये एक हो– "ज्यापू जाति"। ज्यापू जातिलाई काठमाण्डू उपत्यका (प्राचीन नेपाल) को आदिवासी मानिन्छ। राजधानी काठमाण्डू जस्तो आजको आधुनिक चहल-पहल भएको ठाउँमा पनि आजसम्म आफ्नो संस्कृति बचाई राख्न सफल ज्यापू जातिको इतिहासमा भने खासगरी कसैले चासो देखाएको पाइँदैन। कुनै पुस्तकमा ज्यापूको उल्लेख गरे तापनि नाम मात्रका हुन्छ। त्यसैले ज्यापू जातिको इतिहासमा चासो राख्ने कसैको लागि पनि सहयोग होस् भनी एकारामले संकलन गर्नु भएको ज्यापू सम्बन्धी इतिहास पुस्तकमा विभिन्न विद्वानवर्गको अध्ययन तथा पत्र–पत्रिकामा प्रकाशित लेखलाई एकै संगालो बनाई प्रस्तुत गर्ने जमर्को गरेका छौं।

हुन त केहीको भनाई छ, संस्कृति भनेको पुरानो कुरा हो। यस्तो पुरानो कुरालाई बिर्सनु पर्छ। यसैले गर्दा होला हाम्रो समाजमा विदेशी संस्कृतिले आफ्नो हात फैलाउन खोजेको देखिन्छ। हो संस्कृतिको वा इतिहासको नाममा अन्य जाति वा त्यसको संस्कृतिलाई दबाउने वा सामाजिक प्रतिष्ठामै आघात पुग्ने खालको काम त्याग्नु समय सापेक्ष हुनेछ। जे होस् आफ्नो संस्कृतिलाई माया गर्नु देशको गौरव बढाउनु हो।

अन्त्यमा, यस पुस्तिकालाई प्रकाशन गर्न सहयोग पुऱ्याउने सानुकाजी, न्हुछे लाल, ज्योतिकिरण, नवीन, बुद्धिलाल, रत्नकाजीका साथै मुद्रणको काममा सहयोग गर्ने पारामाउण्ट प्रिन्टर्सलाई हार्दिक धन्यवाद दिदछौं।

**ने. सं. ११११ नयाँ वर्ष**

**ज्या. से. स.**
काठमाडौं

# विषय-सूची

| क्र. सं. | लेख | लेखक | पेज नं. |
|---|---|---|---|
| १ ) | 'ज्यापू' शब्द – एक चर्चा | एन. बी. बाटी 'सहयोगी' | १ |
| २ ) | नेपालको जातीय अध्ययन | डा. जगदीशचन्द्र रेग्मी | ७ |
| ३ ) | ज्यापू जातिको वर्गीकरण : एक परिचय | चुन्दा बज्राचार्य | ९ |
| ४ ) | नेपालको प्राचीन कला– एक मूल्यांकन | लैनसिंह बाङ्देल | १६ |
| ५ ) | ज्यापू | के. बी. उदय | २१ |
| ६ ) | नेपाल र ज्यापू | वीरसिं | २४ |
| ७ ) | भक्तपुरका ज्यापू थर – एक चिनारी | ज्योतिकिरण | २७ |
| ८ ) | ज्यापूको ऐतिहासिकता बारे अरू थाहा पाऔं | | २९ |
| ९ ) | हाम्रो चासो | | ३१ |

# 'ज्यापू' शब्द — एक चर्चा

–एन. बी. बाटी 'सहयोगी'

नेपाल एउटा बहुजातीय र बहुभाषीय देश हो । पृथ्वी नारायण शाहको शब्दमा यो 'चारवर्ण छत्तीस जातको फूलबारी हो ।' नेपालको संबिधानले यो देशलाई 'हिन्दू राज्य घोषणा गरेको छ । तर हिन्दू धर्मको अतिरिक्त यो देश बौद्ध, इस्लाम, क्रिश्चियन र अन्य धर्मको पनि सङ्गमस्थल हो । यहाँको भौगोलिक अवस्था एकनासको छैन । त्यसैले यहाँका जनताको भेष, भाषा, संस्कृति र रहन सहन पनि एकनासको छैन । यसरी यहाँ भौगोलिक, धार्मिक, भाषिक, सांस्कृतिक र जातीय विभिन्नता छ । यही विभिन्नताले गर्दा यहाँ एक क्षेत्रका मानिसहरूले अर्कोका मानिसहरूलाई, एक धर्मका मानिसहरूले अर्को धर्मका मानिसहरूलाई, एक जातका मानिसहरूले अर्को जातका मानिसहरूलाई र एक सम्प्रदायका मानिसहरूले अर्को सम्प्रदायका मानिसहरूलाई होच्याउने, खिस्सी गर्ने, हेला गर्ने, उपहास गर्ने र घृणा गर्ने खालका अनेक किस्सा, उखान-टुक्का, गाली र शब्दहरू प्रचलित भै आएका छन् । यही प्रसङ्गमा यहाँ नेवार जातिमा प्रचलित 'ज्यापू' भन्ने शब्दको बारेमा चर्चा गर्न खोजिएको छ । यो 'ज्यापू' पेशा, वर्ग वा अरू नै के हो ? यस सम्बन्धमा एउटा सामूहिक छलफल चलाउने यस लेखको मुख्य उद्देश्य हो ।

हाम्रो नेपाली समाजलाई मल्ल राजा जयस्थिति मल्लले मनुस्मृतिको आधारमा वर्णाश्रम अनुसार चारवर्ण र अनेक जातिमा विभाजन गरेको कुरा इतिहासका पानाहरूमा अंकित छ । केही इतिहासकारहरूले प्राचीन कालदेखि नै नेपालमा हिन्दू वर्ण-व्यवस्था चलेको उल्लेख गर्दै जयस्थिति मल्लको पालामा वर्णाश्रम निरन्तर पतनोन्मुख भै रहेकोले त्यसलाई पुनरुत्थान गर्न उनले त्यसबेलाको समाजलाई चारवर्णको अतिरिक्त अनेक जातिमा विभाजन गरेको कुरा उल्लेख गरेका छन् । तर जातीय विभाजन बारे विभिन्न इतिहासकारहरूले विभिन्न विचार प्रस्तुत गरेका छन् । जस्तै- बालचन्द्र शर्माले "नेपालको ऐतिहासिक रूपरेखा' मा यसरी उल्लेख गरेका छन् ...... 'नेवार जातीयता पनि यस प्रकार हिन्दू वर्ण व्यवस्था अनुसार संगठित गरियो । समाजको अधिकांश भाग ६४ जातिमा बाँडियो । यीनमा चर्मकार, मातङ्गी, धोबी, क्षेत्रकार, लोहकार, कुण्डकार, तण्डुकार, मानन्धर, गाइने, ताम्राकार, कंसाकार, सुवर्णकार, तुलाधर, दारूकार, तक्षक, लेपिक, शिल्पकार, दैवज्ञ, गणिक, ज्योतिषी, आचार्य, अमात्य आदि थिए । नेवारहरू मध्ये आचार्य, बैद्य, श्रेष्ठ र दैवज्ञ माथिल्ला जात मानिए । आचार्यमा तीन, बैद्यमा

चार, र श्रेष्ठमा अनेक भेद मानिए । श्रेष्ठहरू मध्ये दशमा र साथै उपर्युक्त अन्य तीन जातलाई यज्ञो-पवित धारण गर्ने अधिकार दिइयो । शेष समाजको ३६ जातिमा वर्गीकरण गरियो, जस मध्ये ३२ जाति केवल ज्यापू थिए । (पेज १३) सोही पुस्तकमा उहाँले मल्लकालीन सभ्यता बारे उल्लेख गर्दै समाजको चित्रण यसरी गर्नु भएको छः–

'धर्म, बुद्धि र साथै पेशाको मसिनोपनको आधारमा नेपाली बौद्धमार्गीहरूको पहिलो वर्ग तयार भए झैं उदासहरूको दोश्रो वर्ग पनि तयार भयो । यस वर्गको हातमा व्यापार तथा पत्थर, धातु र काठका काम आए । यसै प्रकार खेती र दैनिक जीवनको अन्य कठोर श्रम गर्नु पर्ने र यसकारण बौद्धिक दृष्टिले पिछडिएको ज्यापूहरूको तेश्रो वर्ग बन्यो । (पेज १८४), प्रो. ढुण्डिराज भण्डारीले 'नेपालको आलोचनात्मक इतिहास' मा राईट बंशावली अनुसार नेपाली समाजलाई ६४ जातिमा विभाजन गरेको उल्लेख गर्दै ती ६४ जातिको सूची पनि प्रस्तुत गरेका छन् । 'तर राइट बंशावलीले जातीय विभाजन सम्बन्धि जुन सूची प्रस्तुत गरेको छ–त्यो भरपर्दो छैन' र'''उपर्युक्त नाम र विशेषणहरू व्यक्ति विशेषको अवस्था अनुसार, पद अनुसार र काम अनुसार सम्बोधन र आदरको रुपमा प्रयोग गरिएका हुन' भनि दावी गरेका छन् । सोही पुस्तकमा उहाँले मल्लकालीन सभ्यताबारे उल्लेख गर्दै सामाजिक अवस्थाको वर्णन गर्दा यसरी उल्लेख गरेका छन् 'व्यवसायको आधारमा बौद्ध भिक्षुहरूको बर्गीकरण पनि भएको थियो । सुन चाँदीका गहना बनाउनेलाई बाँडाको संज्ञा प्रदान गरियो, साधारण व्यापारी धातु, काठ, पत्थरमाथि काम गर्नेहरू उदासको नामले अभिप्रेत हुन थाले र शारीरिक कठोर परिश्रमको आधारमा धनोपार्जन गर्ने बौद्ध धर्मानुयायीहरू ज्यापुको नामबाट सम्बोधित हुन थाले ।' नयाँ नेपालको इतिहासमा ईश्वरराज अर्यालले यसरी लेखेका छन् 'नेवार जातिमा पनि हिन्दू वर्ण व्यवस्था अनुसार सङ्गठन गरी आचार्य बैद्य, श्रेष्ठ र दैवज्ञ यी चारथरी उच्च जातको मानिन लागे । समाजका अधिकाँश भाग शिल्पकार, सुवर्णकार, क्षेत्रकार, तन्दुलकार, ज्योतिषी, र धोबी आदि चौसठ्ठी जातिमा बाँडिए । अरु बाँकी छत्तीस जाति खाली ज्यापूहरू थिए ।' ( पेज ५६ ) 'नेपालको सांस्कृतिक तथा ऐतिहासिक दिग्दर्शन' भन्ने पुस्तकमा लीलाभक्त मुनंकर्मी जातीय बिभाजनबारे यसरी लेख्छन्–'सबभन्दा पहिले राजा जयस्थिति मल्लले जातिको मर्यादा मिलाउन लागे । यिनले धर्मशास्त्र बमोजिम जातको ठेगाना गरी स्थिति बाँधि दिएका थिए । पहिरनमा पनि जात हेरी पहिरन गर्नु पर्ने नियम बाँधि दिए । ब्राम्हण, क्षेत्री, वैश्य र शूद्र गरी चार वर्ण र ६४ जात बनाई दिए । (पेज १३६) सोही पुस्तकको परिशिष्टमा राजा जयस्थिति मल्लको घर व्यवहार गर्ने स्थिति र दण्ड-नीति बारे उल्लेख गर्दै मुनँकर्मी लेख्छन्..... 'उनले ४ बर्ण ३६ जातको ७२५ शाखा, उपशाखाहरू स्थापित गराई सुलाधर, सुनाखेत वा सुनाबारी कायम गरेका थिए । (पेज १९७) '३६ जातलाई श्रेष्ठ भनी नामाकरण गरी ती मध्ये १३ जातले तागाधारी हुने गरी चन्देरी, सुवेदी, भण्डारी, आचार्य, दैवज्ञ, मल्ल, प्रधानाङ्ग, मुनँकर्मी, अमात्य कायस्थ, जोशी आदि नाम दिएका थिए । ब्राम्हण जात जतिले द्रविड जम्मा १० जात गराई दिएका थिए । त्यसमा जैसी ब्राम्हणलाई अपूज्य गराई दिएका थिए । ज्यापू जातमा ३६, कुम्हार जातमा ८, कसाई जातमा ७२, कुसले जातमा ६४, बाँडामा ४, कुसुल्यामा ४, पोडेमा ४, चर्मकार, कुल्लु आदिको उपशाखा गराई जम्मा ७२५ जात ठहऱ्याई दिएका थिए ।' (पेज २०४) तर यस सम्बन्धी प्रमाणिक आधार बारे मुनँकर्मीले कुनै संकेत दिनु भएको छैन । त्यस्तै पीताम्बरलाल यादवले 'नेपालको राजनैतिक इतिहास' मा जातीय विभाजन बारे यसरी उल्लेख गरेका छन्– नेपालको समाज ४ जाति र ३६ वर्णमा विभाजित गरियो । ४ जातिमा ब्राम्हण, क्षेत्री, वैश्य र शूद्र आउँदथियो । ब्राम्हणहरू पनि पञ्च गौड र पञ्च द्राविड गरी २ वर्गमा विभाजित

गरिए । ब्राम्हणहरू देव-देवीको पूजाको साथै अन्य उच्च कर्म गर्ने, क्षेत्रीले राजकाज सम्बन्धी कार्य गर्ने, बैश्यले व्यापार गर्ने र शूद्रले खेतीपाती एवं चारै जातिको सेवा गर्ने यिनीहरूको कार्य बाँडियो । ...... अन्य वर्गहरू ६४ जातिमा विभाजित गरिए । शेष समाज ३६ जातिमा बाँडियो, जसमध्ये ३२ जाति ज्यापू मात्र थिए ।' (पेज नं.१८)

माथि उल्लेखित इतिहास सम्बन्धी उध्दरण-हरू त केही नमूना मात्र हुन् । तर यतिले पनि के देखाउँछ भने जातीय विभाजन बारे अहिलेसम्म-को इतिहासले यथार्थ कुरा प्रस्तुत गर्न सकेको छैन । त्यसैले यो केवल अन्धाहरूले गरेको हात्तीको वर्णन जस्तो मात्र भएको छ । यद्यपि जयस्थिति मल्लले सामाजिक सुधारको नाउँमा पेशाको आधारमा त्यस बेलाको नेपाली समाजलाई विभाजित गरेको कुरामा भने दुई मत छैन । तर यहाँ विचारणीय कुरा के छ भने लेखकहरूले आफ्नो पुस्तकलाई इतिहासको संज्ञा दिए तापनि इतिहास सम्बन्धी प्रमाणिक सामग्रीहरूको दृष्टिले विचार गर्दा ईश्वरराज अर्याल र पिताम्बरलाल यादवद्वारा लिखित माथि उल्लेखित पुस्तकहरू इतिहास नभै इतिहासको टिपोट मात्र मान्नु पर्ने हुन्छ । किनभने ती पुस्तकहरू धेरैजसो ( विशेष गरी मध्यकालीन नेपाल बारे ) बालचन्द्र शर्माको 'नेपालको ऐतिहासिक रूपरेखा' र प्रो. ढुण्डी राज भण्डारीको 'नेपालको ऐतिहासिक विवेचना' एवं 'नेपालको आलोचनात्मक इतिहास' कै सेरोफेरोमा घुमेको देखिन्छ । लिलाभक्त मुनकर्मीले जातीय विभाजन बारे अरू इतिहासकारहरूले नलेखेका पनि धेरै कुराहरू प्रस्तुत गर्नु भएको छ । तर त्यस बारे प्रमाणिक आधार सम्बन्धमा कुनै संकेत दिनु भएको छैन । त्यसैले यस लेखमा मैले इतिहास सम्बन्धमा बालचन्द्र शर्मा र प्रो. ढुण्डीराज भण्डारीद्वारा लिखित पुस्तकहरूलाई नै मुख्य आधारको रूपमा लिएको छु । यस तर्फ विचार गर्दा ती इतिहासहरूको आधारमा 'ज्यापू' बारे यही हो भनेर ठोकुवा गर्न सकिने स्थिति देखा पर्दैन ।

बालचन्द्र शर्माले 'ज्यापू' लाई दुई किसिमले प्रस्तुत गर्नु भएको छ– एउटा हिन्दू वर्ण व्यवस्था अनुसार जातिको रूपमा र अर्को बौध्दमार्गीहरूमा पेशाको रूपमा । प्रो. ढुण्डीराज भण्डारीले हिन्दू-वर्ण व्यवस्थामा 'ज्यापू' बारे कुनै उल्लेख गर्नु भएको छैन र बौध्द धर्मानुयायीहरूमा पेशाको रूपमा प्रस्तुत गर्नु भएको छ । शाब्दिक दृष्टिले 'ज्यापू' (ज्यापु ?)को अर्थ खोज्दा नेपाल राजकीय प्रज्ञा प्रतिष्ठानले प्रकाशित गरेको 'नेपाली बृहत शब्दकोष' मा यसरी दिएको छ– 'ज्यापू'– ( ना. संयनफल ) कपासको गेडाभित्र हुने बियाँ, कपासको बियाँ, कपासको बीज ।' 'ज्यापू– (ना. नेवा) खेती मुख्य पेशा भएको एक नेवार जाति ।' पं. हर्षनाथ शर्माद्वारा संकलित र नेपाली साहित्य भण्डार (विराटनगर) द्वारा प्रकाशित 'बृहत् नेपाली शब्दकोष' मा यसरी दिइएको छ- ज्यापु (ना.) कपासको बियाँ । ज्यापू- (ना.) नेपालको एक जाति विशेष । सत्य मोहन जोशीले संकलन गर्नु भएको नेपाल भाषाका 'ब:चाधंगु नेवा खँग्व: धुकू' (अर्थात संक्षिप्त नेवारी शब्दकोष- ले)मा यसरी दिएको छ- ज्यापू-(ना.) गुहले ज्याँ मख्वंम्ह । बुँ ज्यामि; किसान । कपाय् पु । [ नेपालीमा यसको अर्थ– कहिल्यै काम खाली नहुने । खेती मजदुर, किसान । कपासको बियाँ । ] बैद्य पन्ना प्रसाद जोशीले सकलन गर्नु भएको 'संक्षिप्त नेपाल भाषा शब्दकोष' मा यसरी दिइएको छ– ज्यापू (ना.) किसानी, ज्यापू जाति विशेष । शब्दकोषहरूले यसरी ज्यापू र ज्यापु अर्थ फरक फरक दिएका छन् । त्यसले पनि जाति र पेशा दुबैलाई इंगित गरेको छ । त्यसैले शब्दकोषको आधारमा पनि 'ज्यापू' बारे यकिन गर्न सकिने स्थिति छैन ।

अब यस सम्बन्धमा वर्तमान अवस्थाका केही धारणाहरू बारे सामान्य चर्चा गरौं । 'ज्यापू' लाई

कोही जाति ठान्दछन्, कोही पेशा मान्दछन्, कोही वर्गको रूपमा लिन्छन् र कोही यो शब्दलाई नै हेला होचो सम्झन्छन् । सबैका आ-आफ्नै किसिम-कातर्कहरू छन् । जस्तै- 'ज्यापू' लाई एउटा जाति ठान्ने-हरूका विचारमा जयस्थिति मल्लले गरेको जातीय विभाजनमा 'ज्यापू' भन्ने पनि थियो । त्यसैले यो एउटा जाति हो । 'ज्यापू' लाई पेशा मान्नेहरूका विचारमा जयस्थिति मल्लले सामाजिक सुधार गर्दा पेशाको आधारमा नै नामाकरण गरेको हुँदा त्यसबेला खेती सम्बन्धी काम गर्ने किसानहरूलाई नेवार भाषामा 'ज्यापू' भनिएको हो । त्यसैले यो कुनै जाति नभै पेशा हो । अर्को 'ज्यापू' लाई वर्गको रूपमा लिनेहरूका विचारमा नेवार भाषामा 'ज्या'को अर्थ 'काम' हुन्छ र 'पू'को अर्थ 'तल्लीन' हुन्छ । यी दुबैको अर्थ जोड्दा 'काममा तल्लीन' भन्ने बुझिन्छ । जयस्थिति मल्लले सामाजिक सुधार गर्ने सबै शारीरिक रूपमा कठोर परिश्रम गर्ने कामदारहरूलाई 'ज्यापू' भनेर सम्बोधन गरेका हुन् । त्यसैले यो कुनै जाति वा एउटा मात्र पेशा नभै कुनै पनि काममा शारीरिक श्रम गर्ने श्रमजीवी (मजदूर) वर्ग हो । त्यस्तै 'ज्यापू' शब्द नै हेलाहोचो सम्झनेहरूका विचारमा जनतालाई 'फुटाउ र राज्य गर' भन्ने नीति मल्ल राजाहरूले पनि अपनाएका थिए । यही नीति अनुसार जयस्थिति मल्लले सामाजिक सुधारको नाउँमा जनतालाई विभाजन गरी एकले अर्कोलाई हेला होचो गर्ने अनेक नाम दिएका थिए, जसमध्ये 'ज्यापू' पनि एउटा हो । त्यसैले यो कुनै जाति, पेशा वा वर्ग नभैकन हेलाहोचो गर्ने शब्द मात्र हो ।

अब निश्कर्षमा पुगौं । हिन्दू वर्ण व्यवस्थाले एउटै आमाका सन्तानलाई पनि ठूलो-सानो, उँच-नीच, ठ्या मठ्या र छूट-अछूट भनेर भेदभाव गरी गरी मानव समाजलाई विभाजित गरेको कुरा सबैका सामु प्रष्टै छ । यही हिन्दू वर्ण-व्यवस्था अनुसार नै जयस्थिति मल्लले तत्कालीन समाजलाई विभाजन गरेको कुरा पनि इतिहासले बताएको छ । वर्ण-व्यवस्थामा नेवार जाति वैश्यमा पर्दछ । नेपाली समा-जमा अन्य जातिहरू (गुरूङ्ग, मगर, तमाङ्ग, थारू र यादव आदि ) जस्तै नेवार पनि एउटा जाति हो । अरू जातिमा जस्तै नेवार जातिमा पनि अनेक थरहरू छन्, तर 'ज्यापू' भन्ने थर कसैको पनि छैन । यद्यपि अहिले कसै कसैले उपनामको रूपमा 'ज्यापू' लेखेको पाइएको छ । यस दृष्टिकोणबाट विचार गर्दा अहिले 'ज्यापू' भनेर सम्झिएकाहरू वर्णको दृष्टिले वैश्य र जातिको दृष्टिले नेवार हुन् । यसरी वर्ण र जाति किटान भै सकेपछि फेरि कुन अर्थमा 'ज्यापू' भन्ने छुट्टै जाति हो भनेर मान्ने ? त्यसैले 'ज्यापू' भन्ने कुनै अलग जाति होइन ।

त्यस्तै नेपाल एउटा कृषिप्रधान देश हो । यहाँका विभिन्न धर्म, वर्ण र जातिका अधिकांश जनताको मुख्य पेशा कृषि हो । यहाँ कृषि भन्नाले खेती र पशु-पालनलाई लिइन्छ । त्यस्तो खेती एवं पशुपालन सम्बन्धी काम गर्नेलाई किसान भनिन्छ । हाम्रो देशको अहिलेको अवस्था त यस्तो छ भने झन जयस्थिति मल्लको पालामा कस्तो थियो होला ? त्यसबेला देशमा अहिले-को जत्ति पनि उद्योग धन्दाको विकास नभएकोले त्यसवेलाका ९९ % जनताको मुख्य पेशा नै खेती थियो भन्ने अनुमान गर्न सकिन्छ । यस्तो अवस्थामा यदि किसानलाई नै नेवार भाषामा 'ज्यापू' भनिएको भए सीमित मानिसहरू मात्र 'ज्यापू' नभैकन ती ९९% जनता नै 'ज्यापू' हुनु पर्थ्यो । अहिले पनि खेती सम्बन्धी काम गर्ने बाहुन, क्षेत्रीदेखि लिएर सबै वर्ण र जातिका अधिकाँश मानिसहरूलाई 'ज्यापू' मन्नु पर्ने हुन्छ । तर ती बाहुन, क्षेत्री र अरू वर्ण एवं जातिका मानिसहरूले आफूलाई 'ज्यापू' भनेर स्वीकार गर्लान् ? मलाई लाग्छ- गर्दैनन् । त्यस्तै नेवार जातिमा पनि खेती सम्बधी काम गर्ने मानिसहरूलाई किसान भन्दा स्वीकार गर्छन्, तर 'ज्यापू' भन्दा रिसाउँछन् । यस अर्थमा नेवार भाषामा 'ज्यापू' भनेको किसानको पर्याय होइन । त्यसैले यो पेशा पनि होइन ।

यस्तै किसिमले 'ज्यापू' लाई वर्गको रूपमा पनि लिन सकिन्न। किनभने शारीरिक रूपले कठोर परिश्रम गर्ने कामदारहरूलाई नै 'ज्यापू' भनिएको भए 'ज्यामी' शब्दको सार्थकता रहने थिएन। फेरि जयस्थिति मल्लको पालामा आधुनिक मेशीन औजारको विकास भै नसकेकोले सबै काममा शारीरिक रूपले नै कठोर परिश्रम गर्नु पर्थ्यो। त्यसबेला यसरी कठोर परिश्रम गर्नु पर्ने कामहरूमा विशेष गरी खेतीका अतिरिक्त काठ, पत्थर र धातु सम्बन्धी काम तथा माटोको भाँडा बनाउने र ईटा बनाउने आदि काम पर्दथ्यो। त्यो काम गर्ने सिकर्मी, लोहकर्मी, नकर्मी, तमोट, कुम्हाले र अवालेहरू आदि सबै नै 'ज्यापू' हुन्थ्यो। तर तिनीहरूलाई 'ज्यापू' भनिँदैन। अर्को शब्दमा नेवार भाषामा कामलाई 'ज्या' र गर्नेलाई 'मि' भनिन्छ। यी दुबै शब्द जोडेर कामदारलाई 'ज्यामी' भनिएको हो। यही अर्थमा यद्यपि काम गर्ने (कामदार) लाई 'ज्यापू' नभनिकन 'ज्यामी' भन्ने चलन छ। त्यसैले 'ज्यापू' भनेको शारीरिक रूपले कठोर परिश्रम गर्ने कामदारहरूको वर्ग होइन।

माथि लेखिएको आधारमा हामी के टुङ्गोमा पुग्न सक्छौं भने 'ज्यापू' भनेको कुनै जाति, पेशा र वर्ग नभैकन हेलाहोचो गर्ने शब्द मात्र हो। उदाहरणका लागि हामी के लिन सक्छौं भने कुनै नेवारलाई अरू जातिका मानिसहरूले होच्याउनु पर्‍यो वा खिस्सी गर्नु पर्‍यो भने 'ज्यापू' भन्छन्। चाहे त्यो जुनसुकै पेशा वा श्रेणीको किन नहोस्। नेवार जातिमा एक थरका मानिसले अर्को थरका मानिसलाई गाली गर्दा वा यस्तै किसिमले घृणा, उपहास वा गिल्ला गर्दा 'ज्यापू' भन्छन्। यो ध्रुवसत्य कुरा हो, यस लेखका लेखकले पूर्व मेची देखि पश्चिम महाकाली सम्म र दक्षिणमा तराई देखि उत्तरमा हिमाली क्षेत्रसम्म घुमेर पाएको कटु अनुभव हो। विगत कालमा यो शब्दको उत्पत्ति जुनसुकै किसिमले भए तापनि वर्तमान अवस्थामा हामी के देख्छौं भने नेवार जातिमा कसैलाई 'ज्यापू' भनि दिए पछि भन्ने र सुन्ने त्यो भन्दा तल्लो तहको गाली, घृणा, उपहास, गिल्ला र तिरस्कार अरू कुनै नभएको सम्झन्छन्। त्यसैले सुन्नेको लागि यो 'ज्यापू' शब्द सार्है अपच एकदम असह्य र अति अप्रिय साबित भएको छ। अहिले यो चर्चा किन गरिएको हो भने सबै धर्म, वर्ण, जाति र पेशाका जनतालाई गोलबन्द गर्दै मौलिक तथा राजनैतिक अधिकारका लागि र जनताका ब्यापक समस्या समाधानका लागि संयुक्त जन–आन्दोलन उठाउनु पर्ने वर्तमान अवस्थामा एक थरी मानिसहरूलाई असह्य हुने पच्न नसक्ने र चित्त दुःख्ने यस्ता शब्दहरू जुनसुकै दृष्टिकोणले भए पनि प्रयोग नगर्नु राम्रो हुनेछ। त्यसैले जनताप्रति उत्तरदायी हुने कुनै पनि ब्यक्ति, समूह संस्था र प्र. राजनीतिक पार्टीहरूले यस्ता शब्दहरू व्यवहारमा ल्याउँदा बडो होशियार हुनु पर्ने अवस्था छ। यस सम्बन्धमा विद्वत वर्गबाट प्रामाणिक आधारमा यथार्थ कुरा जनसमक्ष आओस् भन्ने अपेक्षा राख्दछु।

☐ साभार– दृष्टि साप्ताहिक, वर्ष ५, अंक ३४, ज्येष्ठ २६, २०४५ (१९८८ जून ८)



# नेपालको जातीय अध्ययन

## नेवार

-डा. जगदीश चन्द्र रेग्मी

बर्तमान नेपाल उपत्यकामा बसोबास गर्ने प्रख्यात जाति ज्यापू हो । ज्यापू शब्दको अर्थ 'धानको काम गर्ने' अथवा खेतीपाती गर्ने हुन्छ । यसरी यस जातिको कृषि ब्यवसायसंग घनिष्ठ सम्पर्क रहेको थाहा पाइन्छ । काठमाडौं उपत्यकामा यही जातिले खेतीपातीको काम धानेको छ ।

ज्यापू जाति आज नेवार वर्गभित्रै गनिन्छ तर साँस्कृतिक र ऐतिहासिक रूपबाट भन्ने हो भने यो जाति वास्तवमा नेवार हैन । यो वर्गमा नेपालका प्राचीन जातिहरूको समावेश पनि छ । पहिलेका लिच्छवीहरू आजका ज्यापू हुन् भन्ने विचार पनि विद्वानहरूले गरेका छन् ।

ज्यापू वर्गलाई वर्ण ब्यवस्थामा शूद्रस्थानीय गनिन्छ । यस वर्गलाई पनि सत् र असत् शुद्रको रूपमा दुई भाग गरिन्छ । पहिलो वर्गमा हिन्द धर्माव-लम्बी ज्यापू आउँछन् । प्राय: गरी यो भादगाउँ भेकमा बसोबास गर्दछ । असत् शुद्रवर्गमा बौद्ध धर्मावलम्बी ज्यापूलाई लिइन्छ ।

ज्यापू वर्ग पनि अनेक थरमा बाँडिएको छ । यसरी थरमा बाँड्दा प्राय: भौगोलिक आधार लिइएको थाहा पाइन्छ । ठाउँ ठाउँका ज्यापूलाई भिन्ना-भिन्नै थर दिने चलन थाहा पाइन्छ । पाटनका ज्यापूलाई डंगोल भन्ने परम्परा यही कुरा बताउँछ । डंगोल बाहेक ज्यापूमा सुवाल, कुमहाल (कुमाले प्रजापति), ग्व (ग्वल अथवा हले) र पिही थर छन् ।

आज ज्यापू वर्गमा पाइने केही थरहरूको उल्लेख मल्लकालीन अभिलेखहरूमा पनि पाइन्छ । ती अभि-लेखमा प्रजापति, सुवाल, महर्जुंग र आवाल (आजका अवाले) हरूको चर्चा पाइन्छ ।

ज्यापू शूद्रस्थानीय मानिएको भए पनि यो वैश्य वर्गको धेरै नजीक छ । शूद्रमा पनि ज्यापूलाई उच्च तहको मानिन्छ । आर्थिक उन्नति गरी ज्यापू श्रेष्ठ थरको प्रयोग पनि गर्न सक्दछ । यसो गर्न उसले श्रेष्ठ वर्गसंग वैवाहिक सम्बन्ध गर्न पर्दछ । गरीब श्रेष्ठहरू यस्ता धनी ज्यापूहरूसंग आफ्नी छोरीको बिहे पनि गरिदिन्छन् । यस्तो स्थितिमा तिनीहरूका सन्तान माथेमा थरका कहलिन्छन् ।

ज्यापू वर्ग उपत्यकाको प्राचीनतम निवासी जातिको प्रतिनिधित्व गर्दछ । यो कुरा जान्न हामीले त्यसको एक थर ग्वा, ग्व अथवा हेलको नालीबेली खोज्नुपर्छ । ग्वा अथवा ग्व नाउँ 'गोपाल' को फेरिएको रूप हो । उपत्यकामा बसोबास गर्नहुने भए पछि आउने पहिलो हिन्दू जाति नै हो भन्ने कुरा मानिन्छ । यस तथ्यको आधारमा ग्वा वर्गले प्राचीन नेपालका शासक गोपालहरूको प्रतिनिधित्व गरेको कुरा प्रष्ट भएको छ । ज्यापू वर्गमा बैष्णव धर्म र श्री कृष्णको लोकप्रियता भएको कुराबाट पनि प्रष्ट हुन्छ कि यो गोपाल जातिकै हाँगो हो । बशावलीको भनोट मान्ने हो भने यो जाति भगवान् कृष्णसंगै यहाँ आई उपत्यकाको प्राचीनतम संस्कृति बनाउने काममा लागेका थिए । ग्वालको बसोबास पनि थानकोट, बोशन, मच्छेगाउँ, मातातीर्थ, कीर्तिपुर, चोभार र पाटन जस्ता प्राचीन स्थलहरूमा छ ।

कान्तिपुर इलाकामा बसोबास गर्ने ग्वा जातिको नाउँ फेरिई हेल बनेको । यहाँको हेल आर्थिक कारणबाट दुई भागमा बाँडिएका छन्– सा-पू (गाई दुहुने) र मे-पु (भैंसी दुहुने) ।

ज्यापू वर्ग उपत्यकाको साँस्कृतिक गतिविधिको अविभाज्य अंग हो । यहाँ भैरहने जात्राहरूमा बाजा बजाउने काम ज्यापूले नै लिएको छ । जात्राका खट बोक्ने र धेरै थरीका लोकनृत्य गर्ने काम पनि यसैले गर्ने गरेको छ । उपत्यकाका धेरै जस्तो मन्दिरको जिम्मेवारी पनि ज्यापूले नै लिएको हुन्छ । यसरी ज्यापूले उपत्यकामा हुने साँस्कृतिक गतिविधिहरूमा महत्वपूर्ण जिम्मेवारी लिएको हुन्छ । यसरी यो जातिले आर्थिक र साँस्कृतिक गतिविधिहरूमा समन्वय ल्याई नेपालको इतिहासमा ठूलो योगदान गरेको देखिन्छ ।

(नेपालको ऐतिहासिक भूगोल (रूपरेखात्मक) पुस्तकबाट उद्धृत, प्रकाशकः– पाठ्यक्रम विकास केन्द्र त्रि.वि )



# ज्यापू जातिको वर्गीकरण : एक परिचय

-चुन्दा बज्राचार्य

## १) परिचय

बागमती नदीको छेउमा अवस्थित १६ × २० माइल लामो उपत्यका परापूर्वकाल देखि नेपालको केन्द्र-स्थल रही आएको छ। नेवार जातिको मुख्य वस्ति प्राचीन नेपाल यही उपत्यकाको वरिपरि मात्र सीमित रहेको देखिन्छ। यही क्षेत्रभित्र पहिलो बस्ति बसाउने जाति हो– नेवार। 'ज्यापू' जाति नेवार जाति भित्रको एक जाति हो। नेवार जातिलाई एक जातिको रूपमा मान्दै आइरहेको छ भने ज्यापू जातिलाई एक उप-जातिको रूपमा मान्दै आएको छ। चलन चल्ति अनुसार आजभोलि 'ज्यापू' जातिलाई उपजातिको रूपमा नलिई एक जातिको रूपमा मात्र मान्न थालेका छन्। नेवार जातिको संख्यामा 'ज्यापू' नति मात्र ४२ %. छ। यिनीहरू नै नेपालमा पहिलो बस्ति गर्ने नेवार जाति हो। शूद्र वर्गमा पनि ज्यापू नेवार जातिको क्रम अनुसार हो हो भने बुद्धमार्गी नेवारमा गुभाजु, बाँडा (बरे) र उराय् (उदास) पछि पर्न आउँछ। तलो जातिको क्रममा खुसः (तण्डुकार), तेपे (व्यञ्जनकार), छिपा (रंजितकार) पुं (चित्रकार), गथु (मालाकार) आदि आउँछ। पहिले गुभाजु (बज्राचार्य), बाँडा (शाक्य), उदास वा उराय् (तुलाधर), तथा ज्यापूका बीचमा एउटै चुल्हो चल्थ्यो भने सामाजिक व्यवस्था अनुसार आजभोली गुभाजु, बरे, उरायहरू-लाई "भात" एउटा मात्र प्रयोग गरेको पाइन्दैन। नेवार जातिको उपजाति 'ज्यापू'लाई जातिको रुपमा, प्रयोग गर्नु पर्ने मुख्य कुरो ज्यापू जाति भित्र पनि विभिन्न उपजाति भएकोले हो। यहाँ विभिन्न लेखक-हरूले भिन्दा-भिन्दै रुपमा ज्यापू जातिलाई वर्गीकरण गरेको केही केही प्रमाणकासाथ (काठमाडौं) ज्यापू समाजमा ज्यापू जातिलाई कसरी बर्गिकरण गरिराखेको छ भन्ने कुरा प्रस्तुत गर्न लागेको छु।

## २) ज्यापू जातिको विकास

गोपालराज वंशावलीमा उल्लेख भएको नेप (गोपालराज वंशावली पृष्ठ १७, क लाईन ५) लाई धनवज्र बज्राचार्यका भनाई अनुसार "नेप" शब्दमा आल प्रत्यय जोडि नेपाल भएको हो। नेपालको अर्थ संस्कृत भाषामा 'सापु' भएको देखिन्दैन। त्यसैले संस्कृतको गोपालको अर्थबाट केही अनार्य आधाबाट संस्कृतकरण गरिराखेको हुनु पर्छ। संस्कृत भाषाबाट कुनकुन जातिलाई गोपाल वा आभीर भन्ने गर्छ, त्यहि जातिलाई उत्तर वा पूर्वबाट आउने किराँतहरूको भाषामा 'ङ-हे-पा' भन्ने गरेको पाइन्छ। 'ङ-हे-पा' को अर्थ 'गाई-भैंसी-पालक' हो। आभीरहरूलाई

"महाभारत" पुस्तक 'सभापर्वमा' शुद्र वर्गमा गनिराखेको छ । अमर कोषमा आभीरलाई "महाशुद्र" बर्गमा पारिराखेको छ । त्यसैले "गाई-भैंसी-पालक" शुद्र वर्गको हो । प्राकृत भाषाबाट कुराकानी गरि संस्कृत भाषाबाट अभिलेख स्थापना गर्ने लिच्छवी वर्मण, गुप्त आदिले 'ङ्-हे-पा' लाई बिगारि "नेपाल" गरिदिए । "नेपाल" शब्द बचाई राख्नकोलागि "ने" मुनिको कल्पना गरि 'नेपाल' भन्ने शब्द नेमुनिबाट पालन गरेको देश भनि परिकल्पना गरिराखेको छ ।

विद्वान वर्गका अनुसार सृष्टिको रचना तथा सभ्यताको आरम्भ सबभन्दा पहिले हिमालयको दक्षिण-तिरको उपत्यकाबाट भयो । आदि मानव पनि भयो । नेवार नेपालको मूल जाति हो । नेवार आदिमानव हो । यसको पुष्टि नेवारको आकार प्रकार भाषा र संस्कृतबाट गर्छ ।

गोपाल वंशावलीका अनुसार लिच्छवी नेपालमा आई राज्य गर्नु अघि ३२ किरॉंत राजाहरुको नाम उल्लेख भएको पाइन्छ । उनीहरू नेवार जातिका राजाहरू हुन् । त्यसपछि लिच्छवी राजा भए । लिच्छवीहरू पनि नेवार भएकोले यिनीहरू पनि नेवार राजा नै भए ।

नवौं शताब्दीया अन्त्यतिर उत्तर प्रदेशबाट वैश्यहरू आई लिच्छवीहरुलाई जिति नयाँ राज्यको स्थापना गरि यो नया आउने वैश्यले लिच्छवीहरुलाई राजकाजको कुनै अभिभारा नदिई कृषक वा ज्यापू बनाइदिए ।

यसरी ज्यापू शब्द उत्तर प्रदेशबाट आउने वैश्यहरूले लिच्छवीहरुलाई नामाकरण गरेको नवौं शताब्दी देखि देखिन्छ ।

जयस्थिति मल्लले नेवारलाई काम अनुसार जति विभाजन गरेकोमा सबभन्दा बढी ३२ जातिका ज्यापू भनि वर्गिकरण गरेको देखिन्छ । त्यसैले कोलिन रोसेरले आफ्नो लेखमा नेवार जाति भित्र ४२·/. केवल ज्यापू मात्र छ भनि उल्लेख गर्नु भएको छ ।

कृषि पेशा गर्ने ज्यापूहरू जो इमान्दार, सोझा, मेहनती र सहनशील छन्, यिनीहरुलाई शाह र राणाहरुको शासन कालमा अलि दबाउने कोशिश गर्‍यो । जसले गर्दा यिनीहरुको अवस्था दिनदिनै दयनीय हुँदै गए । २०२१ को मुलुकी ऐनमा 'मोह-यानी हक सुरक्षा' भए देखि कृषि पेशामा आश्रित ज्यापूहरूको आर्थिक अवस्था पनि सुधार हुँदै आयो ।

गोपालसिं नेपालीले आफ्नो पुस्तक 'नेवारस' (Nawars) मा 'ज्यापू' दुई अक्षरआई यसरी अर्थ दिन खोजिएको छ । 'ज्यापूको 'ज्या' अक्षरले काम (गर्नु) र 'पु' अक्षरले एक प्रकारको 'तौली धान' भनी अर्थ गरिराखेको छ । त्यसैले पहिले "तौलि धान" रोप्ने काम गरेकोले ज्यापू भनेको हो ।

कसै-कसैको भनाई छ काम बढी गर्न सक्ने भएकोले 'ज्यापू' भनेको हो । पछि 'ज्याफू' को 'फू' बाट 'पू' भई 'ज्यापू' भएको हो ।

ज्यापू खास गरी बुद्धमार्गी भए तापनि केही ज्यापू हिन्दूमार्गी समाजमा नदेखिएको होइन । यस्ता ज्यापू मुख्यतया ज्यापू जातिबाट स्यस्यः (श्रेष्ठ) हुन खोजेहरू भेटिन्छ । कोही कोही ज्यापूहरू छिंडि-मा बाहुनबाट पुजा गराई माथि (चोटा) गुभाजुबाट संगसंगै कर्मकाण्ड गराउने पनि छ । यस्ता किसिमका उदाहरणमा जैसी देगल (काठमाडौं) टोलका डंगोल हुन् । बुद्धमार्गी ज्यापू हिन्दूमार्गी हुन जाने प्रवृत्तिले गर्दा 'शुद्र' जाति भन्ने जुन भनाई छ त्यसमा पनि दुई टुक्रा भई 'सत् शुद्र' र 'असत् शुद्र' भन्न थाले । हिन्दू धर्म मान्ने ज्यापूलाई 'सत् शुद्र' तथा बौद्ध धर्म मान्ने ज्यापूलाई 'असत् शुद्र' भन्ने गरे । यी दुई 'सत् शुद्र' र 'असत् शुद्र' का बीच कुनै समस्या बिना वैवाहिक सम्बन्ध पनि कायम हुने भयो ।

ज्यापूहरू विस्तारै हिन्दू हुँदै गइरहेका छन्। यस्तै कुरालाई लिई लिई गोपालसिं नेपाली यसो भन्नु हुन्छ– जब ज्यापू धनी भयो भने आफ्नो जातिलाई श्रेष्ठ भनी प्रयोग गर्छ साथ साथै गरीब श्रेष्ठका छोरीबेटी बिहा गरी सन्तान भएमा त्यस्ता परिवार पछि गएर पूर्ण श्रेष्ठ हुन्छ। माथेमा जाति यस्तै कार्यबाट बिकास भएको जात हो। स्यस्य वर्गको उपजाति हो।

माथेमा जाति जस्तै यदि गुभाजु, बाँडाहरूले 'चूडाकर्म' गर्नु अघि विवाह भई सन्तान भएमा त्यस्ता सन्तान पछिको परिवारलाई पनि 'ज्यापू' जाति भन्ने परम्परा छ। तर आजभोलि यस्ता गुभाजु, बरे (बाँडा) हरूले आफ्नो जाति परिवर्तन गरी लगेको भेटिंदैन।

प्रजापति (कुम्हाः) जाति पहिले ज्यापू जाति भन्दा तल्लो खुसः (तण्डुकार) र पेपे (व्यञ्जनकार) जातिको वर्णमा राखिएको जात हो। काठमाडौंको धेरैजसो ज्यापूले कुम्हाल (प्रजापति) जातिसंग सबै विधि व्यवहार लेनदेन गरेदेखि कुम्हाललाई पनि ज्यापू जाति भित्र नै समावेश हुनगए।

## ३. ज्यापू जातिलाई विभिन्न जातिमा वर्गीकरणः–

'पानी चलने' जातिको वर्गमा पर्ने ज्यापू जातिको मुख्य काम कृषि पेशा गरी देशको चौतर्फी विकासमा टेवा पुऱ्याउनु हो। यिनीहरू खेती किसानीमा मात्र सीमित नरही देशको हरेक क्षेत्र भित्र रही काम गर्दै आइरहेको छ। आजभोलि ज्यापू जाति उच्च शिक्षा प्राप्त गरी श्री ५ को सरकार, त्रि. वि. वि. सेवा, संघ संस्थान आदि स्थानहरूमा डाक्टर, इन्जिनीयर, अधिकृत, शिक्षक आदिको रूपमा पनि देखिन्छ।

'ज्यापू' लाई कृषक वा किसान पनि भनिन्छ। यो ज्यापू वा कृषक वा किसान शब्दले 'ज्यापू' जातिको सबै क्षेत्र तिर समावेश हुन्छ। यही ज्यापूलाई विभिन्न रूपमा विभाजन गरी उपजातिको बिकास भएको देखिन्छ। यी उपजाति काम अनुसार विभाजन गरिएको हो।

ज्यापूलाई कोलिन रोसेरले ८ उपजातिमा वर्गीकरण गरिराखेको छ-

१) महर्जन २) डंगोल ३) सुवाल
४) दुवाल ५) सापु ६) काबुजा
७) मूसः ८) लवत आदि।

गोपालसिं नेपालीले ज्यापू जातिलाई उपजातिमा यसरी वर्गीकरण पाइन्छ–

१) सुवाः ४) ग्वाला– क) मेपु, ख) सापु
२) कुम्हाः ५) फही
३) डंगोल

ग्वाला उपजातिलाई दुई भागमा वर्गीकरण गरी 'मेपु' र 'सापु' भनी किराँत कालको 'ङ्हेपा' लाई अगाडि ल्याएको छ।

हडसनले उल्लेख गरिराखेको सूचीको अध्ययन गर्दा 'ज्यापू' जातिलाई दुई भागमा बाँड्न वा वर्गीकरण गर्न सकिन्छ।

१) करूणामय (रातो मच्छिन्द्रनाथ) सित सम्बन्धित ज्यापूको उपजाति
२) करूणामयसित सम्पर्क नभएको काम (प्रत्यक्ष रूपमा) गर्ने ज्यापूको उपजाति।

| करूणामयसित सम्पर्क नभएको ज्यापू उपजाति | करूणामयसित सम्पर्क भएको ज्यापू उपजाति |
|---|---|
| १) किसान | १३) मू |
| २) बोनी | १४) ओकु कुम्हा(ल) |

३) दगू १५) कुम्हाः(ल)
४) कावुजा १६) वल्हेज
५) कम्हा(ल) १७) नली
६) मुशक १८) युग्वार
७) चिउ १९) गःकु (घःकु)
८) अवाले २०) स्वः
९) गों, १०) वोसी,
११) कोइनास्व, १२) जिवानली

काठमाडौं (यें) का ज्यापू समाजको अध्ययन गरी हेर्दा चलन चल्ती अनुसार उपजातिमा वर्गीकरण गरे पनि नाम पछि जाति लेख्नु पर्दा एकै किसिमको लेखिएको देखिन्छ। चलन चल्तीमा ज्यापू उपजातिलाई लेख्ने काममा त्यति जोड नदिएको पाइन्छ। त्यसैले ज्यापू जातिलाई पहिले दुई उपजातिको रूपमा वर्गीकरण गर्न सकिन्छ।

क) लेखाईमा प्रयोग गर्ने उपजाति नाम
ख) चलन चल्तीमा प्रयोग गर्दै आइरहेको उपजाति नाम

## ३. १. लेखाईमा प्रयोग गरेको उपजाति नामः-

स्कूल, क्याम्पस, अफिस प्रमाण पत्रमा आदि ठाउँमा दर्ता भई राखेको नामको पछाडि प्रयोग गर्ने उपजाति यसको छ।

क. डंगोल ख. महर्जन ग. सिं
घ. सुवाल ङ. प्रजापति च. पाछै आदि

## ३. २: चलन चल्तिमा ज्यापू समाजमा प्रयोग हुँदै आएको ज्यापू उपजाति-

काठमाडौं निवासी सम्पूर्ण ज्यापूलाई भौगोलिक दृष्टिले वर्गीकरण गरेको पाइन्छ। कहीं ठाउँ ठाउँका देवदेवीको नाममा त्यहाँ पालो बस्नेको रूपमा वर्गीकरण गरेको छ। कहीं खाद्यको आधारमा छ, कहीं जीवजन्तु पाल्ने रूपमा, कहीं गुठीको आधारमा, कहीं कामको आधारमा वर्गीकरण भएको छ। जसले गर्दा ठाउँ अनुसार काम भएको स्पष्ट हुन्छ।

## ३: २. १. भौगोलिक अनुसार वर्गीकरण-

मल्ल कालमा काठमाडौंलाई एक राज्यको रूपमा लिई आएको हो। त्यसबेलामा नै तीन टुक्रामा विभाजन गरेको पाइन्छ।

क. थनें (माथि)
ख. क्वने (तल)
ग. दुथुंत्वा (बीचको)

यो मल्लकालको भौगोलिक विभाजन भएको समाज आज सम्म चलन चल्तीमा बाँकी नै छ। यस विभाजनमा ज्यापूहरूका अनुसार टेंगल टोल भन्दा माथि थँने (माथि), मरू टोल भन्दा तल क्वँने (तल), अनि टेंगल र मरू टोलको बीचलाई दथुंत्वाः (बीचको टोल) भनिन्छ। तर पहिलेको भनाई अनुसार भए पनि ढुंगे माछा (असन) देखि माथि वा उत्तरको भागलाई थँने, मरूको ठूलो ढुंगा (आजभोली छैन) देखि तल वा दक्षिण भागलाई क्वँने, ठूलो ढुङ्गा र ढुङ्गे माछाको बीचको भागलाई दथुंत्वा भनिन्छ। ज्यापू समाजमा देखिए अनुसार कुमारीको रथ जुन जुन ठाउँमा तान्छ त्यही इलाकालाई मात्र शहर र बाँकी भागलाई गाउँ भन्ने भनाई छ यस भौगोलिक कथन अनुसार ज्यापू जातिलाई वर्गीकरण यसरी गरेको पाइन्छ -

क. थँने ज्यापू, ख. क्वने ज्यापू,
ग. दथुंत्वा ज्यापू

यस्ता ज्यापूहरू एक ठाउँबाट अन्य ठाउँमा बसाई सरे पनि आफ्नो पुरानै ठाउँको नाम लिन्छ।

थँने, क्वने र दत्थु भन्दा विस्तृत भए तापनि ठाउँ अनुसार ज्यापू भन्ने गर्छ। जसले गर्दा थने, क्वने र दत्थु क्षेत्रको कुन टोलको भन्ने थाहा पाउन सकिन्छ। त्यसैले तीन ठाउँलाई पनि विभिन्न रूपबाट ज्यापूलाई वर्गीकरण गरेको पाइन्छ।

३.२.२. क) थने ज्यापूलाई यसरी वर्गीकरण गर्न सकिन्छ।

१) टँगल टोलबासीज्यापू
२) किलागलबासी "
३) ज्याथाबासी " (गामा ज्यापू)
४) ठमेलबासी ज्यापू
५) छुस्या बहाल, मुस्या बहाल ज्यापू आदि
६) जमल्बासी ज्यापू

३.२.१. ख) क्वँने ज्यापूहरू यसरी बर्गिकरण गर्न सकिन्छ।

१) भलननी ज्यापू
२) तननी "
३) मसुबहा "
४) बलपु "
५) वर्क छे "

३.२.१. (ग) दथुत्वा ज्यापूलाई पनि थँने, क्वँनेका ज्यापूलाई जस्तै वर्गीकरण गर्न मिल्छ।

१. वंवमि (इन्द्रचोक) ज्यापू
२. न्यतमी (नरदेवी) ज्यापू
३. मरू (किसानी) आदि

थँने क्वँने भन्दा दथुत्वा सानो ठाउँ हो। यस भित्र धेरै क्षेत्र पर्न आउँदैन। अर्को ढुङ्गेमाछाबाट सीमा निर्धारण भए तापनि असनको केही भाग सम्म पनि दथुत्वा भन्ने गरेबाट नरदेवी सम्म पनि दथुत्वामा पर्न आउँछ तर चलन चल्तीमा यसो नगरेको पाइन्छ।

३.२.२. द्यः पाःला (पुजारी वा देवमन्दिर र मूर्तिको पालो बस्ने) को रूपमा ज्यापूलाई वर्गीकरण–

'देवता' (द्यः) प्रति आस्था नहुने जाति त शायद कम नै होला। द्यः अथवा देवता प्रति आस्था राखी देवताको सफा, सुग्घर गरी देवताको रक्षा गर्नेमा रक्षकको रूपमा देखिने जाति मध्ये एक ज्यापू पनि हो। यिनीहरूकै सहायतालले परम्परा देखि देव देवताहरूको जात्रा सुचारू रूपले चल्दै आएको छ। अझ यिनीहरूले गर्दा नै युग-युगसम्म पनि यो जात्रा संचालन हुँदै जानेछ। देवता रक्षक (द्यः पाला) को रूपमा रहेका ज्यापू यस प्रकारका छन्।

| | | |
|---|---|---|
| क. भिंद्यः | पाला ज्यापू | –भीमसेनस्थान |
| ख. पचली भैरव | " | –पचली, टेकु |
| ग. मरू गणेश | " | –मरू टोल |
| घ. आजुद्यः | " | –इन्द्रचोक |
| ङ. लुतिमरू अजिमा | " | –विष्णुमती, ढल्को |
| च. न्यतमरू अजिमा | " | –नरदेवी |
| छ. तानाकिसि खलः | " | –किलागल |

देवताको रक्षक वा द्य पाला ज्यापू देवता भएको स्थान वा टोलमा भेटिन्छ आफ्नो पुर्खौली ठाउँ छोडी अर्कै ठाउँमा बसाई सरे पनि त्यस्ता ज्यापूलाई द्यः पालाकै रूपमा सम्बोधन गर्ने गर्छ। द्यः पाला ज्यापू देवताको पालो पाले पालो गरी बस्नु पर्ने पनि छन् भने कुनै ज्यापू द्यः पाला भए पनि पालो बस्न नपर्ने पनि छन्। यस्तोमा कोही मन नभएर त कोही पालो बस्ने काम बाँडफाट गर्न नमिल्ने भएकोले हो।

३.२.३. तरकारी (धारु) को रूपमा ज्यापू जातिको नामः–

एक विषयमा बढी ज्ञान भएकालाई 'विशेषज्ञ' भन्ने चलन छ। ज्यापू पनि कृषि पेशाबाट आफ्नो जीविका धान्ने भएकोले खेतीको कुनै पनि काममा विशे-

यता प्राप्त गर्नु स्वाभाविक पनि हो । यस्तै विशेषताले गर्दा पनि ज्यापुलाई बुझाउने भयो । यस्ता विशेषताको रूपमा निम्न अनुसार वर्गीकरण गर्न सकिन्छ ।

क. बकुला- निखल (चसान र यटखा टोल)- बकुला तरकारीका रूपमा

ख. वकं छें- तरकारीको रूपमा (कुखुराको फूल खान नहुने जाति) -पचलीं जाने बाटोमा

ग. फकं- बा कर्कलो तरकारीको रूपमा (पचली भैरबको दः पाला)

घ. पाछैं-- पाछैं वा सागपात तरकारी रोप्नु र ब्यापार गर्ने नरदेवी टोलका तर नरदेवी मन्दिरसंग सम्बन्धित नभएको ।

३.२.४. पशुपालन गर्ने गरेबाट ज्यापू जातिको वर्गीकरण:-

पशुपालन गरी घाँस र पानीको लागि पशु चराउन जानेलाई "पु" भनिन्छ । कुन कुन जीव जन्तुहरू पालन गरेका छन् त्यही जीव जन्तुको नामको पछाडि 'पु' जोडी नामकरण गरेका उपजाति यस प्रकार छन् ।

| नाम | | काम (ज्या) | बस्ती |
|---|---|---|---|
| १. सापु | – | गाई पालन गर्ने | किलागल |
| २. मेपु | – | भैंसी पालन गर्ने | " |
| ३. फैंपु | – | भेंडा पालन गर्ने | " |
| ४. हचेंपु | – | हाँस पालन गर्ने | लगन टोलबाट पचली जाने बाटोमा |

यो मुख्य बस्तीलाई लिई लेखेको हो । सा (गाई), में (भैंसी), हचें (हाँस) र फै (भेंडा-च्याङ्ग्रा) कसैले पनि पालने काम गर्न सक्छ । तर सापु (गाई पालक), मेपु (भैंसी पालक), फैंपु (भेंडा-च्याङ्ग्रा पालक) र हचेंपु (हाँस पालक) भन्दा माथि उल्लेखितलाई मात्र बुझाउँछ ।

३.२.५. गुठीको नामबाट ज्यापूको उपजाति:-

"नेवार बिग्रियो भोजले, परवते बिग्रियो मोजले"

भन्ने उखान ठीकै जस्तो देखिन्छ । नेवारहरूको भोज हुने कारण मध्ये एक गुठी पनि हो । कुनै कुनै गुठी (संघ संस्था) सेवा भावको लागि राखेको छ भने कुनै मात्र मनोरञ्जनको लागि छ । धेरैजसो गुठी संचालन गर्दै आउनेमा ज्यापू नै हो । गुठीकै रूपमा पनि ज्यापूलाई वर्गीकरण गरेको पाइन्छ ।

क. मू ज्यापू – मूस्वाँ गुठी

ख. गों ज्यापू – गों गुठी

करुणामय (रातो मछिन्द्रनाथ) मूस्वाँ (एक किसिमको फूल) चढाउनको लागि एक गुठी बनाएको हुन्छ । यस गुठी भित्रका गुठीयारले मात्र यो मूस्वाँ (फूल) रोप्न पाउँछ अन्यले पाउँदैन ।

गुभाजु, बाडाँ, उदास तथा ज्यापु नै पनि मृत्यु भएमा "लाश" दाह संस्कार गर्न मसान ल्याएका उक्त असहाय लाशलाई सहारा दिन सेवाको रूपमा गों गुठी (मृत्यु संस्कार गरिदिने संस्था) संचालन गर्दै आउने ज्यापुलाई गों भन्ने चलन छ ।

३.२.६. काम वा ज्याको रूपमा उपजाति-

कोही कोही ज्यापूलाई कामका रूपमा उपजाती भएको देखिन्छ ।

| उपजाति | काम (ज्या) |
|---|---|
| क. दगु (डंगोल)– | खेत नाप्ने काम गर्ने |
| ख. का: बुजा – | का: (एक प्रकारको बाजा) बजाउने |
| ग. नालबन्दी ज्यापू– | घोडाको खुट्टामा नाल ठोक्ने |
| घ. सुवाल – | भोजमा भान्छेको काम गर्ने |

ङ. पुलपुल ज्यापू – मूर्दा लाँदा ति (एक किसिमको बत्ती) बाली जाने

च. अवा: (अवाल)– अग: (ईंट पोल्ने भट्टी) धा ईंटको काम गर्ने

छ. फू वरे ज्यापू – पंचदानको समयमा अन्तिम दान लिने ज्यापू

आजभोलि जस्तै मल्लकालमा खेती नाप्ने कार्य जो जसले पायो त्यस त्यसले खेती नाप्ने काम गर्नु हुँदैन। त्यसबेला दगू (डंगोल) ले खेती नाप्ने गरी आएको हो। आजभोलि सम्म पनि कोहीको खेती नाप्न परे यिनीहरूलाई नै बोलाउने गरेको पाइन्छ। तर यिनीहरूलाई श्री ५ को सरकारले मान्यता दिएको छैन। का: एक किसिमको बाजा हो जुन ठुल-ठूला पूजा तथा लाश मसान लाँदा पनि बजाउने गर्छ। यो बाजा बजाउँदा स्वर्गका देवता आई हेर्न आउने विश्वास छ। नालबन्दी ज्यापू गाई पाल्ने पनि छन्। हरिहर सिंको समयमा दिल्लीबाट नेपालमा तलेजू भवानी ल्याउँदा जङ्गलमा भेट्टिएको राँगो देउतालाई भोग दिई ज्यापू मध्ये एकलाई सुवाल बनाई दिए। त्यसबेला देखि त्यस भोग बनाउने वा पकाउने ज्यापू सुवाल भयो। यसरी ज्यापू जाति भित्र सुवाल उपजाति भयो।

३.२.७. अन्त्यष्टि क्रियामा भित्रिएका उपजाति ज्यापू
क) का:बुजा ख) पुलपुल ग) गोँ

३.२.८. कुमा: (कुम्हाले) ज्यापू

पहिले ज्यापू जाति भन्दा तलको जातिमा पर्ने कुम्हाले ज्यापूसित धेरैनयो विधि ब्यवहार गरी ल्याए देखि ज्यापू भित्र समावेश हुँदै आएको छ।

क) धउ भ्यग: कुमा:– दहीको भाँडो (माटोको) मात्र बनाउने कुम्हाले

ख) ब्यासी कुमा:– ब्यासीमा (ठाउँ) मात्र गई कुम्हाले काम गर्ने

ग) हाकु कुमा:– कालो माटोको भाँडा बनाउने कुम्हाले

घ) ह्याउँ कुमा:– रातो माटोको भाँडो बनाउने ज्यापू।

कुम्हाले जातिले माटो भाँडा बर्तन बनाई ब्यवसाय गर्दै आएका छन्। यसो भए तापनि सबै कुम्हाले भाँडा (माटोको) बनाउने गरेको पाइदैन। धउ वा धौ (दही) भ्यग: कुम्हालेले दहीको भाँडो (धौ भ्यग:) मात्र बनाई दहीको ब्यवसाय गर्नेलाई सहयोग गर्दै आएको छ। ब्यासी कुम्हालेले आफ्नै घरमा माटोको भाँडा बनाउने गर्दैन। कालो माटोको काम गर्ने कुम्हालेले रातो माटोको भाँडा बनाउँदैन। आजभोलि रातो माटो वा कालो माटोको भाँडा बनाउने भनी काठमाण्डूमा अलग अलग पाइदैन। सबै कुम्हालेले माटोको भाँडा बनाउने गर्छ तर भक्तपुरमा भने यस्तो देखिदैन।

३.२.९. ज्यापूबाट पुर्खौली उपजाति भएका–

यस्ता उपजाति कतै नराम्रो नाम (कुनां) को रुपमा बिकास भई आएको छ भने कतै ब्यवसायको रुपमा पनि विकास भई आएको छ। पहिले एक ब्यक्तिको नामको पछाडि यस्तो कुना (नराम्रो नाम) राख्यो वा बस्यो भने पछि उसका सन्तानलाई पनि त्यस्तै नामले चिन्हाउने गरेको पाइन्छ। मोतिमाया भ्वाबसा डंगोलका अनुसार नरदेवी टोलका ज्यापू जितनारांले बढी भ्यावर थ्वँ: (एक प्रकारको जाँड) मात्र प्रयोग गर्ने गरेकोले जितनारां भ्यादर भन्ने नाम भए। पछि गई छोरा, छोरी, नाती, पनाति सबैलाई भ्यावर समूह (खल:) भन्ने गर्‍यो। यसै गरि नराम्रो नाम (कुनां) उपजातिको रुपमा विकास भएको वा देखिएको यस प्रकार छ।

क) भ्यावरा ज्यापू – ४ समूह (नरदेवी टोल काठमाण्डौ)

ख) ख्या: (ख्याक) ज्यापू – ८ समूह

यिनीहरूलाई दुई भागमा बाँधिएको छ ।

१) ख्याः खलः मात्र

२) दुरु ख्याः खलः– दूध (दुरु) को व्यवसाय गरेकोले यस्तो नामकरण भएको हो (असन टोल)

ग) स्याःवजि ज्यापू, –टेङ्गल टोल

घ) माकः ज्यापू –लगन, ब्रम्हटोल

ङ) घउचा ज्यापू –किलागल

च) ध्वँगरा ज्यापू –मरुटोल

## ४) उपसंहार

नेवार संस्कृतिमा पूर्ण भएका ज्यापू जाति मेहनती, लगनशील र कार्य दक्षता भएका जाति हुन् । मूख्य पेशाको रुपमा खेतिको काम गर्ने भएका ज्यापू जाति ठाउँ अनुसार यिनीहरूको उपजाति फरक छ । ज्यापू देशको सबै जसो ठाउँमा छ । मूख्यतया यस्को बस्ती काठमाण्डौ, ललितपुर र भक्तपुर मात्र देखिन्छ । यसो भएता पनि काठमाण्डौका ज्यापूको उपजाति ललितपुर र भक्तपुरमा देखिन्दैन् । काठमाण्डौ ललितपुर, भक्तपुर तीनै ठाउँमा ज्यापूको उपजाति विकास भएको देखिन्छ । कुनै कुनै उपजाति सबै ठाउँमा एकै किसिमको भएता पनि कुनै कुनै ज्यापूको उपजाति त्यहीं छैन । यसो हुनुको मुख्य कारण उपजाति भनेको वनाउने जाति हो वा एक जातिवाट अर्कोमा विकास भई आउने हो । ठाउँ अनुकूलको रुपमा पनि विकास भएको पाइन्छ । साथसाथै उपजाति कायम गर्दै आएको छ । भ्याबरा, ख्याः, माकः आदि उपजाति नया रूपमा विकास भई आएका जात हो । बनाउँछु भनेर बनेको होइन । कहीं कहीं जात काम अनुसार विकास भए, कहीं गुठी अनुसार । अनि बलियोले निर्बलियोलाई दबाई आफू ठूलो जात अरू बाँकी सानो जात भनी एकै जातिभित्र ठूलो सानो जातको सृजना गरे । वास्तवमा भन्ने हो भने जात भनेको केही होइन । परम्परा देखि चलि आएको संस्कार संस्कृतिलाई बलियो बनाउने मुख्य खम्बा मात्र हो ।

काठमाडौं एउटा यस्तो ठाउँ हो 'जहाँ विभिन्न स्थानबाट कामको लागि आई बस्ति गरी बस्छ । त्यसैले यहाँ विभिन्न स्थानका जातिहरू घुलमिल भै बसेका छन् । प्रमाणका लागि तानसेनका अर्थशास्त्री 'पृथ्वीराज लिगल' पनि एक हो । 'लिगल' ज्यापू जातिको एक उपजाति हो । तर 'लिगल' उपजाति काठमाडौंमा कहीं देखिदैन ।

( "गँ" वार्षिक पत्रिका, ने. सं. ११०५ गुँलाबाट उद्धृत । प्रकाशकः "गँ" नेपाल भाषा साहित्य खलः, त्रि.वि. कीर्तिपुर )

–नेपाल भाषाबाट अनुदित



# नेपालको प्राचीन कला – एक मूल्यांकन

–लैनसिंह बाङ्गदेल

हाम्रो देशको प्राचीन इतिहासलाई हेर्दा लिच्छवी राजा मानदेव (प्रथम) का समय अर्थात् ई. सन् ४६४ देखि मात्र नेपालको प्राचीन इतिहास छर्लङ्ग हुँदै गएको हामी पाउँदछौं। यसका साथै नेपाली प्रस्तर कलाको इतिहास पनि उही कालदेखि स्पष्ट हुँदै गएको देखिन्छ। यी कुराहरू चाँगु–नारायणको मानदेवको अभिलेख तथा तिलगंगा र लाजिम्पाटका (हाल संग्राहलयमा सुरक्षित) विष्णु विक्रान्तका मूर्तिका अभिलेखद्वारा थाहा पाइन्छ। यस समय भन्दा अधिको नेपालको इतिहास त्यति स्पष्ट छैन्।

नेपाल उपत्यका प्राचीन कालदेखि आर्य संस्कृतिको एक विशेष केन्द्र हुन आएको कुरा अनेक पुरातात्विक वस्तुहरूले प्रमाणित गर्दछन्। तर नेपालको पुरानो इतिहासको चर्चा गर्दा हामी तथाकथित धेरै शताब्दीसम्म राज्य गरेका किराँत राजाहरूको उल्लेख गरी प्राचीन इतिहाससित जोर्न खोज्दछौं। आजसम्म ती अनार्य कहलिएका किराँत जातिको पुरातात्विक कुनै प्रमाण फेला पर्न सकिएको छैन। पूर्व नेपालमा बसोबास गर्ने जाति आफूलाई किराँत भन्दछन्; यिनलाई हामी विशेष राई र लिम्बू भनेर चिन्दछौं। महाभारत तथा अरु प्राचीन भारतीय ग्रन्थहरुमा उल्लेख भएको तथा लिच्छवीकालका अभिलेखहरूमा पनि उल्लेख भएको किराँत जाति वास्तवमा को थियो त्यसको विशेष वैज्ञानिक ढंगले अध्ययन र अनुसन्धान हुन बाँकी नै छ। तर नेपाल उपत्यका अर्थात् काठमाडौंमा नेवारहरूमा पनि विशेष ज्यापूहरूको पुर्खा नै अनार्य किराँत जाति हुनमा आश्चर्य छैन। आर्यहरूको भारत वर्षमा प्रवेश हुनु भन्दा पहिले नै सायद यो किराँत जाति हिमालयका फेदीमा ब्रम्हपुत्रका मैदानबाट पसी फिंजिदै गएको अनुमान हुन्छ। तराईका थारु जति पनि प्राचीन जाति हो। तिनको रहन–सहन, सामाजिक व्यवहार, पूजा–आजा सबै ब्राम्हण धर्मका जस्ता छैनन्। बरु अनार्य आचरणलाई बढी अंगालेको देखिन्छ। राई, लिम्बू, थारु तथा ज्यापूहरूको पितृनजाको पद्धतिमा धेरै मेल खान्छ। तर कैयन् शताब्दीसम्म आर्यहरूको संसर्गमा रहनु परेका काठमाण्डौंका ज्यापूहरुमा भने बौद्ध तथा ब्राम्हण धर्मको प्रशस्त छाप परेको देखिन्छ।

कसै कसैले फेरि ई० पू० तेश्रो शताब्दीमा सम्राट अशोक नेपाल आई पाटनमा चारस्तूप खडा गरेको कुरा उल्लेख गरिन्छ। पाँचौ वा छैठौं शताब्दीका

लिच्छवी अभिलेख हेर्दा उनताका ससाना ग्राम तथा केही ग्रामहरू मिलि द्रंगसम्म भएको थाहा पाइन्छ अर्थात् उस बेला नगरसम्मको स्थापना भएको देखिदैन भने अशोकको पालामा झन् ती गाउँहरूको अवस्था कस्तो थियो होला कल्पना गर्न सकिन्छ । त्यस्ता महान् सम्राटलाई यस उपत्यकामा आउन कुन कुराले आकर्षित गऱ्यो होला विचारणीय कुरा छ । यस सन्दर्भमा उनको छोरी चारुमति नेपाल आई एक क्षेत्रीय राजकुमारसंग बिहे गरी पछि भिक्षुणी भई चारुमती विहार निर्माण गरी आफ्नो अन्तिम दिन त्यहीं बिताएकी घटनासंग पनि नेपालको इतिहास जोर्ने प्रयास गर्दछौं । तर हामीसंग त्यसको कुनै प्रकारको पुरातात्विक प्रमाण छैन् न त भारतका इतिहासमा ती कुराको चर्चा नै भएको छ ।

आर्यहरूको नेपाल उपत्यकामा प्रवेश हुनुभन्दा अघि नै किराँती जाति यहाँ आइसकेको अनुमान हुन्छ तर यो पनि आर्य संस्कृतिले नछोएसम्म असभ्य नै रहेको बुझिन्छ । आर्यहरूको संसर्गमा आएपछि मात्र वैदिक देवी देवतासित उनीहरू परिचित हुन थालेको भन्ने कुरा निश्चय छ । त्यस भन्दा अघि यी अनार्य जातिको धर्म र कला के थियो त भन्ने कुरामाथि विचार गर्दा जस्तो अरु-अरु प्राचीन जातिको लोक धर्म थियो उस्तै चीनको पनि धर्म थियो । पितृपूजा, नागपूजा, गिरी पूजा, वृक्ष पूजा, नदी पूजा र मातृ पूजा नै चीनको लोक धर्म रहेको बुझिन्छ । चिनको पूजामा पशु बलि चढाई भोज खाने चलन आज पनि कुनै न कुनै रुपमा थारु, ज्यापू, राई लिम्बूहरूमा छँदैछ । तर अब तिनै प्राचीन लोक देवी देवता पछि गएर ब्राम्हण तथा बौद्ध धर्मका देवी देवतासँग मिसिएर तिनको अर्को नाउँ भएको बुझिन्छ । कालिदासले हिमालयको वर्णन गर्दा बनमा बस्ने किरात जातिको जुन उल्लेख गरेका छन् तिनै किराँत आजका ज्यापू, थारु तथा राई, लिम्बूका पूर्खा हुँदा हुन् ।

(रुपरेखा दुईसय-विशेषांक, वर्ष १८ अङ्क ८, पुष २०३४)

(यो लेखको केही अंशमात्र)



# ज्यापू

–के. बी. उदय

## आर्थिक

ज्या ( काम ), ज्यामि (कामदार), ज्यासः (कारखाना) ज्यालु (रोजगार) र ज्यापू (कार्यदक्ष–टेक्निसियन) एउटा विषय प्रसङ्गमा देखिएका क्रिया संज्ञा हो । काम गर्ने मान्छेलाई 'मि' प्रत्यय राखेर 'ज्यामि' बनाएको हो । काम गर्ने ठाउँ भएकोले 'ज्यासः' भएको हो । काममा नै काम खोज्न जानेलाई 'ज्यालु' भनिन्छ । ज्यापु भनेको अर्कै हो । त्यो हो कार्यदक्ष-टेक्निसियन भएकालाई 'ज्यापू' । नेपाल भाषामा 'पु' भनेको संस्कृत भाषा अनुसार अन्तमा आउने प्रत्यय हो । नरमाइलो भएको कारणले काम गरी जीवन बिताउनेलाई 'ज्यापू' भनेको हो । यसो भएकोले यो शब्दले जातिको विषयमा केही बोध गर्दैन । तर क्रिया विशेषले जसलाई भए पनि सम्बन्ध राख्ने कोशिश गर्दछ ।

कामदारहरूमा पनि ज्यापू (टेक्निसियन) हुन्छ, कारखानामा पनि ज्यापू हुन्छ, तर ज्यापू (जाति) कामदार होइन, कारखानाको कर्मचारी होइन । जुन काम गरी खाने हो त्यही कामको नामबाट 'सिकमी' मरिकमि, बज्रकमि इत्यादि नै भन्छ तर काम गरी यसो भने पनि ज्यापू भनिँदैन । यसो भन्दाखेरी ज्यापू (जाति) भन्ने अर्थ शास्त्रको परिभाषा अनुसार त्यही हो जसले ज्याला लिन हक दाबी गर्न सक्दैन । यसो भने पछि ज्याला लिने मान्छे त 'ज्यामि' हो ज्यापु होइन । यो परिभाषा पनि स्पष्ट छैन । हाम्रो इतिहासको आर्थिक व्यवस्था अनुसार ज्यापू त्यही हो जसले केही भाउ या सापट लिए बापत कृतज्ञ भएर काम गरिदिन्छ । यसो भने पछि ज्यापू त्यही हो जो दास हो । तर नेवार सभाजमा दास भए जस्तै ज्यापू पनि भएकोले केवल दास प्रथाको भावले ज्यापू दास हो भन्न हुँदैन । ज्यापूको सम्बन्ध ज्याला मात्र होइन, कारखाना मात्र होइन जहाँ पनि अर्काको काम गरी आफ्नो जीवन बिताई रहने क्रियाप्रधान विशेष जातलाई ज्यापू भन्छ, तर यो (ज्यापू) जाति होइन ।

## मजदूर ज्यापू किन भएन ?

कारखाना वा मीलमा काम गर्ने तलवी वा ज्यालादारी दुबैलाई मजदूर नै भनिन्छ, ज्यापू भनिँदैन । केवल काम हेरेर परिश्रम गरे अनुसार ज्याला नपाउने नै पाश्चात्य जगतमा सर्वहारा हो । हाम्रो समाजमा ज्यापू पनि यसरी नै हो । यसो भएकोले सर्वहारा

भन्नेहरू ज्यापू हो।

श्रम त्यसरी भए पनि यसको प्रकृति फेरि-एकोले ज्यापू सबै सर्वहारा होइन।

## कसरी किसानमा ज्यापू जन्म भयो ?

किसानहरूलाई जग्गा मालिक तलसिंग (जमीन्दार) हरूले लेखेर दिई राखेको कबुलियत कागजपत्रबाट थाहा पाउँछौ कि किसान मोही हो जसले तलसिंगलाई बाली बुझाउँछ । त्यही किसान ज्यापू हो ; जसले तलिसंको घरमा आवश्यक काम गरिदिनु पर्छ चाहे खाना छ वा छैन, ज्याला हुन्छ वा हुँदैन । यसो भने पछि ज्यापू भन्ने खुवाए मात्र पुग्ने, ज्याला दिन कर नभएको ज्यामि हो । किसानको अर्को पर्यायवाची शब्द आर्थिक ज्यापू हो।

## यो के नीच हो र ?

एकजना किसान जसले आफूलाई ज्यापू भनी गौरव गर्छ उसले एक पटक च्यामिको छोरालाई गाली दिएको कुरा सुनेर ज्यापूको अर्थ यसरी बुझियो। पहिले यहाँ गाली दिएको संबाद एक पटक अगाडि राखौं। यो यस प्रकार छ। "तिमीले पढेन भने ज्यापू भएर खानु पर्ला।" यहाँ बुझ्न कोशिश गर्‍यो भने ज्यापू त्यही हो जसले ज्ञान नपाए पछि शारीरिक काम गरेर खानु पर्ला। च्यामिले ज्यापू भन्ने अर्थमा जातको छुवाछूतको भेदभावबाट पनि ज्यापू एक तह नीच जात जस्तो देखिन्छ। उच्च जात होइन। आफ्नो बुद्धिले काम नगर्ने केवल अरूको बुद्धिबाट काम गरी एक पेटको नोकर नै ज्यापू हो। कामले काम देखाउँछ, कामले जाति परिवित हुँदैन।

## किन किसानहरूमा मात्र ज्यापू सीमित भयो ?

खेतमा काम गर्ने किसान हो, तर आफ्नो खेत नभएको केवल मोही भएर तलिसगको कागजमा लेखे बमोजिम काम गरेर खानु पर्ने मोही ज्यापू भएकोले ज्यापू जहाँ गए पनि जोसुकै ज्यापू नभएर किसानहरूमा मात्र ज्यापू भएको हो। अर्काको कुराबाट बुद्धि जानी अर्काको कामले जिन्दगी बिताउने नै 'ज्यापू' हो। आफ्नो काम गरेर खान नपुग्ने अर्काको काम गरेर खान पुर्‍याउने ज्यामि किसान नै ज्यापू हो।

## सांस्कृतिक मान्यताः–

नेपाल देश पहिले देखि कृषिप्रधान भन्नु पर्ने देश हो। आजभोलि बाहिरबाट चामल ल्याउनु परे पनि कृषिप्रधान देश नै हो। किसानवर्ग अत्यावश्यक वर्ग भएकोले नेपाल जातको शब्दको भावले पनि नेपाल समूहमा ज्यापूको सांस्कृतिक मान्यता भएको कारणले हरेक पक्षले विवेचना गर्न हुन्छ।

## ऐतिहासिक कारणः–

पहिलेको देवता वा तीर्थको उत्पत्ति खोज्यो भने ज्यापूको हात पहिलो भएको देखिन्छ । स्वयं लोकेश्वर करूणामय, भद्रकाली, कङ्ग द्यो ज्यापूले ल्याएको भन्छ। देवता खोज्ने, देवता ल्याउने भएको कारणले हाम्रो साँस्कृतिक मान्यतामा ज्यापूको महत्व धेरै छ।

## धार्मिक कारणः–

धर्ममा ज्यापू स्वयं सेवक हो। इनारमा पानी तान्न जाउ वा कुलो खन्न जाउ वा कसैको घर बनाउन जाउ वा छाना लाउन जाउ वा रथ तान्न जाउ वा बोक्न जाउ ज्यापू स्वयंसेवक हो। धर्ममा स्वयंसेवक भएर काम गर्ने भएकोले धार्मिक कारणबाट जातिको भेद आएमा खाने, पिउने काममा ज्यापूसित कसैको मतभेद छैन। ज्यापू रोजगार हो। जाति होइन। गुठी विषय अनुसार अध्ययन गर्‍यो भने ज्यापू उही हो जसले बाली तिर्न नपर्ने गरी किसानी काम गरेर

गुठीको थकाली गुठियारहरुलाई आवश्यक काम गरी दिनु पर्ने ज्यामी हो । ज्यापूलाई ज्यामी गर्ने कानून, यो भावले हेर्ने हो भने भूमिसुधार सफल हुन पाउँछ भन्न सक्तैन । तर जग्गाको सट्टामा पैसा दिएर काम गराउने चलन गुठी संस्थानले दिई आएकोले भूमि सुधारको प्रतिक्रियामा हिन्दू धर्ममा धर्म ह्रास हुने सम्भावना धेरै देखिन्छ ।

किसानलाई एक पटक खेत किनी दिई (Paid loan) उसको तर्फबाट पैसा तिर्न नपर्ने गरी अर्थात ज्याला दिन नपर्ने गरी काम लिई उसलाई ज्यामी नभन्ने तरीका नै हो ज्यापू । यसो भए पनि भोज खाने कुरामा त्यो ज्यापू गुठियार भएकोले धर्ममा साँस्कृतिक मान्यता छ भन्नु पर्छ ।

## सामाजिक कारणः—

मोही भएका तलिसगहरूको सामाजिक अवस्था हेर्‍यो भने जन्मेदेखि मृत्यु भए पछि मात्र होइन मरेर गइसकेको मान्छेको कर्मकाण्ड गरी सकेर पनि ज्यापू-को भूमिका सामाजिक मान्यतामा छोडन सक्तैन । मलामी गुठी, संक्रान्ति गुठी, पूर्णीमा गुठी त्यस्तै अरू राजदरबारिया गुठी पनि अनुसन्धान गर्‍यो भने पालो कहिले पनि लिन नपर्ने तर सधैं पालो लिने मान्छेको काम गर्नु पर्ने गुठियार ज्यापू हो । किसान भएर ज्यामी हुन नपाएको ज्यापू हो । मजदूर भएर पनि ज्याला नपाउने ज्यापू हो ।

सामन्ती प्रथामा देखिने सर्वहारा वर्ग जसले ऋण लिई ब्याजको सट्टा श्रम नै ब्याज दिन्छ उही ज्यापू भएकोले ज्यामी ज्यापू हुँदैन तर विकासमा ज्यापू ज्यामी भएर स्वाभाविक आर्थिक विकास हो ।

हाम्रो भाषामा काम गनलाई पुरानो भाषामा 'पु' प्रत्यय राखेर भन्ने चलन पहिले थियो । स्वर बे-मनासिव सापू (गोपाल), मेपू (महिषपाल), हर्चेपू (हाँसपाल) जस्तै यिनीहरू ज्यापू भएको खस भाषा-विद्हरूको भनाई देखिन्छ ।

## ज्यापूको रहन सहनः—

ज्यापूको गुठीलाई मंका भन्छ । मंका भनेको कुनै एउटा जातिको मात्र गुठी हो भन्ने प्रमाण छैन । जुन काम गर्नु परे पनि मिलेर काम गर्नु नै यसको विशेषता हो । किसान वर्गमा धेरै जात छन् । तर यो मंका कसैको जाति विशेष होइन तर समुदाय हो । यसो भएकोले ज्यापूको मंका कम्यून (Commune), हो, जुन ठाउँमा सबैले चन्दा राखेर खान्छ, आएको ज्याला संग्रह गरेर मंकालाई बलियो बनाउँछ ।

यसरी बलियो भएको मंका भए पनि ज्यापूको रहन सहन प्रगतिशील छैन, संघर्षशील छैन । सधैं सहनशील भए जस्तै धर्मसा पनि सहिष्णुता छ । जातीय एकता भए जस्तै धर्ममा सहिष्णुता भएको विषय जो ज्यापू आर्थिक विकासमा काममा नआउने गुण हो । उसिना चामलको भात खाने, कर्कलो (फकं) र सिस्नु तरकारी खाने, खाद्य भाँडोमा माटोको भाँडो (कसि), यिनीहरूको सम्पत्ति हो । अरूले दिएको लुगा लगाउने लाएर हिंड्ने यिनीहरूको आर्थिक बाध्यता हो अरूको काम गर्नु आवश्यकता हो । आफ्नो नभएर निस्वार्थी भएर पनि सधैं अरूको नोकर भएर बस्नु पर्ने बाध्यता निस्वार्थ भएर पनि अरूको काम गरेर पनि असल मान्छे भनाउन नसकेको मान्छे हो ज्यापू । यिनीहरू-को महल नै छाप्रो हो । आजभोलि यो चित्रण देखिदैन । ज्यापू ज्यामी भयो तर आफ्नो दुःख नसम्झिकन बसेर भए पनि सधैं दुःखी हुने कर्तव्यको सधैं सम्झना छ ।

(इनाप साप्ताहिकः दँ ६, थ्यँल्याः २६६, ने. सं. ११०८, २०४५ असार१५)

—नेपाल भाषाबाट अनुदित



गुठीको थकाली गुठियारहरूलाई आवश्यक काम गरी दिनु पर्ने ज्यामी हो। ज्यापूलाई ज्यामी गर्ने कानून, यो भावले हेर्ने हो भने भूमिसुधार सफल हुन आउँछ भन्न सक्तैन। तर जग्गाको सट्टामा पैसा दिएर काम गराउने चलन गुठी संस्थानले दिई आएकोले भूमि सुधारको प्रतिक्रियामा हिन्दू धर्ममा धर्म ह्रास हुने सम्भावना धेरै देखिन्छ।

किसानलाई एक पटक खेत किनी दिई (Paid loan) उसको तर्फबाट पैसा तिर्न नपर्ने गरी अर्थात ज्याला दिन नपर्ने गरी काम लिई उसलाई ज्यामी नभन्ने तरीका नै हो ज्यापू। यसो भए पनि भोज खाने कुरामा त्यो ज्यापू गुठियार भएकोले धर्ममा सांस्कृतिक मान्यता छ भन्नु पर्छ।

## सामाजिक कारणः–

मोही भएका तलिसिगहरूको सामाजिक अवस्था हेर्‍यो भने जन्मेदेखि मृत्यु भए पछि मात्र होइन मरेर गइसकेको मान्छेको कर्मकाण्ड गरी सकेर पनि ज्यापूको भूमिका सामाजिक मान्यतामा छोडन सक्तैन। मलामी गुठी, संक्रान्ति गुठी, पूर्णीमा गुठी त्यस्तै अरू राजदरबारिया गुठी पनि अनुसन्धान गर्‍यो भने पालो कहिले पनि लिन नपर्ने तर सधैं पालो लिने मान्छेको काम गर्नु पर्ने गुठियार ज्यापू हो। किसान भएर ज्यामी हुन नपाएको ज्यापू हो। मजदूर भएर पनि ज्याला नपाउने ज्यापू हो।

सामन्ती प्रथामा देखिने सर्वहारा वर्ग जसले ऋण लिई ब्याजको सट्टा श्रम नै ब्याज दिन्छ उही ज्यापू भएकोले ज्यामी ज्यापू हुँदैन तर विकासमा ज्यापू ज्यामी भएर स्वाभाविक आर्थिक विकास हो।

हाम्रो भाषामा काम गर्नलाई पुरानो भाषामा 'पु' प्रत्यय राखेर भन्ने चलन पहिले थियो। स्वर बेमनासिब सापू (गोपाल), मेपू (महिषपाल), हर्चेपू (हाँसपाल) जस्तै यिनीहरू ज्यापू भएको खस भाषाविद्हरूको भनाई देखिन्छ।

## ज्यापूको रहन सहनः–

ज्यापूको गुठीलाई मंका भन्छ। मंका भनेको कुनै एउटा जातिको मात्र गुठी हो भन्ने प्रमाण छैन। जुन काम गर्नु परे पनि मिलेर काम गर्नु नै यसको विशेषता हो। किसान वर्गमा धेरै जात छन्। तर यो मंका कसैको जाति विशेष होइन तर समुदाय हो। यसो भएकोले ज्यापूको मंका कम्यून (Commune) हो, जुन ठाउँमा सबैले चन्दा राखेर खान्छ, आएको ज्याला संग्रह गरेर मंकालाई बलियो बनाउँछ।

यसरी बलियो भएको मंका भए पनि ज्यापूको रहन सहन प्रगतिशील छैन, संघर्षशील छैन। सधैं सहनशील भए जस्तै धर्ममा पनि सहिष्णुता छ। जातीय एकता भए जस्तै धर्ममा सहिष्णुता भएको विषय जो ज्यापू आर्थिक विकासमा काममा नआउने गुण हो। उसिना चामलको भात खाने, कर्कलो (फकं) र सिस्नु तरकारी खाने, खाद्य भाँडोमा माटोको भाँडो (कसि), यिनीहरूको सम्पत्ति हो। अरूले दिएको लुगा लगाउने लाएर हिड्ने यिनीहरूको आर्थिक बाध्यता हो अरूको काम गर्नु आवश्यकता हो। आफ्नो नभएर निस्वार्थी भएर पनि सधैं अरूको नोकर भएर बस्नु पर्ने बाध्यता निस्वार्थ भएर पनि अरूको काम गरेर पनि असल मान्छे भनाउन नसकेको मान्छे हो ज्यापू। यिनीहरूको महल नै छाप्रो हो। आजभोलि यो चित्रण देखिदैन। ज्यापू ज्यामी भयो तर आफ्नो दुःख नसम्झिकन बसेर भए पनि सधैं दुःखी हुने कर्तव्यको सधैं सम्झना छ।

(इनाप साप्ताहिकः दँ ६, थ्यँल्याः २६६, ने. सं. ११०८, २०४५ असार १५)
–नेपाल भाषाबाट अनुदित



# नेपाल र ज्यापू

-वीरसिं

"नृतत्वशास्त्रको अध्ययनबाट पुरानो जातिहरू मध्ये ज्यापू ...... जाति देखिन्छ । ...... विशेषत: ज्यापू जाति धेरै नै पुरानो र लिच्छवी भन्दा पनि धेरै नै अगाडि देखि नेपाल खाल्डोमा बसोबास गरी आएका एक जाति हो। ... नेपाल खाल्डोको आदिवासीहरूलाई 'नेपाल' भनिन्छ ।" (झीगु भाय् झीगु खँग्व) यसरी भनेपछि नेपाल जातिहरू ज्यापु जाति, यिनीहरू नै नेपालको आदिवासी हो भन्ने प्रमाणित भएको देखिन्छ ।

ई. सं. ६२९-६४३ तिर भारतीय सम्राट हर्ष वर्धनको दरवारमा आएका चिनियाँ यात्री हुयनसाङ्गले नेपाललाई नि–पो–लो भनेर उल्लेख गरेको देखिन्छ। नेपाललाई नि-पो-लो भने जस्तै जापानलाई 'निप्पोन' भन्ने चलन छ। निप्पोनको 'नि' को पर्यायबाची शब्द जापानको 'ज्या' (dzəe) भएको छ। यो जापानको 'जा' लाई ज्या (dzəe) भनेर अंग्रेजी शब्दकोषमा उच्चारण गरी लेखि राखेको देखिन्छ। नि-पो-लोको 'नि' को अर्थ पनि 'ज्या' नै भन्न ठीक देखिन्छ। भाषा विज्ञान अनुसार चीन-तिब्बत भाषा परिवारको नाताले पनि यस कुरा मिलेको देखिन्छ । किनभने नेपाल र जापान दुबै देशमा पनि प्राचीन चीनको प्रभाव धेरै देखिन्छ ।

अब नेपाल शब्दको 'पाल' तिर जाउँ । गोपाल जातिलाई 'सापु' महिषपाललाई मेपु, मेषपाललाई 'फैंपु' भन्ने परम्परा यहाँ अहिले पनि छ । यहाँ गोपाल महिषपाल र मेषपालको 'पाल' को पर्यायवाची शब्द 'पु' हो । यसो भने पछि नेपाल शब्दको अर्थ वा पर्यायवाची शब्द 'ज्यापू' भएको देखिन्छ । मनूस्मृति (१०।४३-४४) अनुसार किरातीहरू वृषभपाल जातिहरू हुन्। यस्तै नै गुरूङ्गहरू मेषपाल जातिका हुन । ई. सं. चौंथो-पाचौं शताब्दीतिर मेषपालको रूपमा पहाडि इलाकामा बसी आएको देखिन्छ । त्यसैले गुरूङ्गहरूलाई हेला घृणा गरी फैंपु (मेषपाल) भन्ने चलन छ जसरी नेपाल जातिलाई 'ज्यापू' भनी हेला गरी भनिन्छ ।

नेपाल जातिलाई ज्यापु भन्ने चलन खसहरूमा अहिले पनि देखिन्छ । नेपालको आदिवासीहरूलाई नेपाल जाति भनिन्छ । नेपाल जातिहरू नेवार हो ।

यिनीहरूको भाषा नेपाल भाषा > नेवार भाषा भयो । चीन तिब्बती भाषा परिवारको समूह भएको कारणले नेपाल भाषा भनेको हो । जस्तै बङ्गाल भाषा, जापान भाषा, चीन भाषा, नेपाल भाषा इत्यादि । तर इण्डो-यूरोपियन ( भारोप ) भाषा परिवारको मुखबाट नेवारी (नेपाली) भाषा, चीनी भाषा, जापानी भाषा आदि भन्ने चलन यिनीहरूको विशेषता हो भन्ने नेपाल भाषा, चीन भाषा, जापान भाषा आदि भन्नु चीन-तिब्बत भाषा परिवारको विशेषता । खस भाषा पनि इण्डो-यूरोपियन भाषा परिवारको शाखा भाषा भएकोले नेपाल जातिलाई नेवार जाति, नेपाल भाषालाई नेवारी भाषा, नेपाल सम्वत्लाई नेवार सम्बत्, नेपाल संस्कृतिलाई नेवार संस्कृति भन्यो । यसरी खसहरूले मात्र नेपाल जातिलाई ज्यापू, नेपाल जातिले बोलिने भाषालाई ज्यापू भाषा भनी आएको होइन । राणा शासनको समयमा दरबारमा नोकरी गरेका नेवारहरूले पनि नेपाल भाषालाई ज्यापू भाषा भनी आएको देखिन्छ । 'नेपाली विहार' को प्रकाशक र सम्पादक श्री फत्ते बहादुर सिंहले आफ्नो पुस्तकको भूमिकामा यसरी लेखेका छन् । "आफ्नो बच्चाहरूले मातृभाषा (नेपाल भाषा) ले कुरा भन्यो भनि ज्यापू भनेर गाली गरी नबोल्ने भनेर अनेक किसिमले हप्काएर पर्वति (खस) को भाषाले नै कुरा गर्न लगाउँछन् । मानौ नेवार भाषा भनेको ज्यापूहरूले मात्र बोलिने ।"

हो, नेपाल भाषा बोल्ने ज्यापूहरू मात्र होइन भारतबाट आएका आर्यहरूले नेपाल भाषा बोली नेपाल जाति भनी आएका छन् ।

डा. कमल प्रकाश मल्लले आफ्नो 'सिकमिया स्वाने' पुस्तकमा– 'नेपालको लिच्छवी, ठकुरी, गुप्ता, वर्मा, अभिर र मल्ल राजा अर्थात सामन्तहरूले आफूलाई नेवार भनी कहीं कतै भनेन । तर पनि किरात, कोल, शाक्य, लिच्छवी, ठकुरीहरू जस्तै मल्ल राजाहरू पनि मल्ल कालमा नेपाल खाल्डोमा बसोवास गरी आएका सबै (खस बाहेक) नेवार भएर गए । किरात कोल र शाक्यहरू संगै लिच्छवी, ठकुरी, गुप्ता, बर्मा अभिर मल्ल सबै एकीकृत भएर आदिवासी नेवारहरूको भाषालाई आफ्नो मातृभाषा जस्तै बोली आफू पनि नेवार समाजमा बिलिन भएर गयो ।" यसरी नै 'झीगु भाय् झीगु खँग्व' पुस्तकमा इन्जमालीले 'ज्यापू जातिबाट सर्वप्रथम नेपालको आदिभाषा नेपाल भाषाको संरक्षण र सम्बर्धन भएको छ' भनी भनेका छन् । यस भनाईले पनि आदिवासी र आदिभाषा क्रमश: ज्यापू जाति र ज्यापू भाषा (नेपाल भाषा) हो भन्नु पर्छ ।

जयस्थिति मल्लले क्रकुच्छन्द बुद्ध नेपाल आएर ब्राम्हण, क्षेत्रीहरूलाई दिक्षीत गरेको सर्वसाधारणको विश्वास अनुसार हिन्दु वर्ण व्यवस्था संगठित गऱ्यो । त्यस समाजलाई अधिकांश भाग ६४ वटा जातिमा वर्गीकरण गऱ्यो । पृथ्वीनारायण शाहले जयस्थिति मल्लको वर्ण व्यवस्थाको आधारका साथै अनार्य नेवार जातिलाई पनि लिएर चार जात छत्तिस वर्णमा विभाजित गरेको देखिन्छ । यस ३६ वर्ण पनि जात नभएर काम अनुसारको पद वा थर हुनु पर्ने हो । वर्ण शब्दले ब्राम्हण, क्षेत्री, वैश्य र शुद्रलाई ग्रहण गर्छ भने जाति वा जात शब्दले कूलमा जन्म भएको वंश परम्परा अनुसार पेशा तत्वलाई मात्र गर्छ । चार वर्णमा नपरेका पेशा तत्वको आधारमा अनार्य नेपाल जातिहरूलाई छत्तिस भागमा विभाजन गरि दियो । जुन छत्तिस थर मध्ये बत्तिस थर कामानुसारको नेपाल जातिमा मात्र छ भनिन्छ । यसरी नेपाल जाति समाजमा त्यस समयमा जन्म अनुसार होइन आफूले जानेको पेशा कामको साथै सरकार तर्फबाट दिएको कामको आधारमा सरल श्रम विभाजन मात्र भएको थियो । पछि यिनीहरू सबै जन्मानुसार नै आफ्नो जात थर राख्ने परम्परा हुन गयो । वर्ण व्यवस्था समय समयमा विभिन्न किसिमबाट भएको देखिन्छ । गोपाल वंशावलीमा दिएको हिन्दू समाजको वर्ण व्यवस्था पनि छन् । राजा सुपुष्पदेवले आफ्नो प्रजाहरूलाई चार जातमा वर्गीकरण गरेको देखिन्छ । जयस्थिति मल्ल

भन्दा पहिले लिच्छवी कालमा चार वर्ण अठार जात मात्र थियो। जयस्थिति मल्लले चार वर्णलाई ६४ जातमा विभाजन गऱ्यो भने पृथ्वीनारायण शाहले चार जात ३६ वर्णमा विभाजन गऱ्यो।

अर्थशास्त्री रिकार्डोको लगान सिद्धान्तको निर्जन टापूको उदाहरणले पनि नाग दह (काठमाडौं उपत्यका) को एउटा भाग ललितपुरमा ज्यापू जाति वसोबास गरी आएको ठाउँबाट पनि ज्यापूहरू नै पुरानो वा आदिवासी भन्न सकिन्छ। ललितपुरको मुख्य उर्वरा भूमि कर्मनाश खोला, नखु र बागमती मनोहराको दायाँ बायाँका उर्वरा भूमिको माथि बास गरेका छन्। नेपाल सम्बत् शुरू गर्ने "शंख नामक शाख्वाल भन्ने ज्यापू हो" भनी नेपाल सम्बत्को अनुसन्धानदाताहरूले देखाएका छन्। धार्मिक दृष्टिकोणबाट हेऱ्यो भने पनि नेपालको विशेषता धार्मिक सहिष्णुता ज्यापू जातिमा जस्तै अरूमा छैन। यिनीहरू हिन्दू पनि होइन बौद्ध पनि होइन। दुवै धर्मले मान्ने लोकेश्वर (बुँग्द्यो) नै मुख्य देवता हो। ज्यापूहरूको परम्परा देखि मानि आएको प्राचीन सनातन धर्म हो। भाषाको तर्फबाट दृष्टिगत गर्दा पनि लिच्छवी आउनु भन्दा पहिले नै यी ज्यापूहरूको शब्दहरू सयौं छ भने कुरा अन्वेषकहरूले भनी सकेको छ।

(प्रयास: (सामयिक संकलन) ने. सं. ११०७, प्रयास परिबार पाटन) –नेपाल भाषाबाट अनुदित।



# भक्तपुरका ज्यापू थर एक चिनारी

*–ज्योति किरण*

काठमाडौं (नेपाल) उपत्यकाको तीन प्राचीन शहर मध्ये भक्तपुर अति प्राचीन शहर मानिन्छ । यस शहरमा प्राचीनकाल देखि विभिन्न जातिको बसोबास भई आएको छ यसमा कृषि पेशा अंगाल्ने ज्यापू जातिको संख्या बढी छ । ज्यापूको अर्थ किसान नभएता पनि मुख्यतया कृषि पेशा अगालेनेलाई नेवार समुदायमा ज्यापू भन्ने गरेबाट अब पर्यायवाची भईसक्यो । यहाँका ज्यापू वा किसानीहरू स्वाबलम्वी छन् । आफ्नो जीवनक्रम चलाउन यिनीहरू अन्य जातिको भर पर्नु पर्दैन । कृषि पेशा बाहेक माटोको काम गर्नु, पशुपालन गर्न, कपडा बुन्नु, काठ-ढुङ्गा आदिको काम गर्नु पनि पेशाकै रुपमा परम्परादेखि अंगाल्दै आएका छन् । भक्तपुरमा ज्यापू भित्रका बिभिन्न किसिमका थर भेटिन्छ ती निम्न प्रकारका छन् :

१) बासुकला
२) सुवाल
३) दुवाल
४) कोजु
५) आचाजू (कर्माचार्य)
६) बैद्य
७) घोँजू
८) घोंजू
९) फैजू
१०) फोजू
११) ब्यान्जू
१२) ब्वेँजू
१३) खाइजू
१४) बोहजू
१५) धाजू
१६) जो[illegible]
१७) छवाजू
१८) दुमुरु
१९) देशेमरु
२०) बाताजू
२१) माकजू
२२) थुयाजू
२३) थुयाजू
२४) सायजू
२५) ख्याजु
२६) कर्वा
२७) तागे
२८) त्यात
२९) थुसा
३०) कुम्पाख
३१) कुलन्खा
३२) न्यइच्याई
३३) खोतेजा

| | | |
|---|---|---|
| ३४) तुसिवाख्यो | ६१) भैल | ८८) कोन्दा |
| ३५) मारिखु | ६२) लाखा | ८९) कुसी |
| ३६) मचामसी | ६३) कुस्मा | ९०) फेलु |
| ३७) द्यम्बसु | ६४) गोट | ९१) सुकुभतु |
| ३८) छुस्याबाग | ६५) वाँताकछी | ९२) माता |
| ३९) बाई | ६६) धकुछुं | ९३) बजिको |
| ४०) लघु | ६७) सुलु | ९४) लाखेमरु |
| ४१) साँढ | ६८) धौबन्जा | ९५) लवं |
| ४२) यानामी | ६९) जाकीबन्जा | ९६) नागा |
| ४३) सुजखु | ७०) मुकुपायो | ९७) खत्री |
| ४४) त्वायना | ७१) मनताहा | ९८) छुंका |
| ४५) ह्योंग | ७२) बासी | ९९) तोन्जू |
| ४६) ह्याउँमिखा | ७३) नाखन्द | १००) चिकंबन्जा |
| ४७) गैंडा | ७४) वगथु | १०१) आगन्जा |
| ४८) जति | ७५) ज्याख्व | १०२) दन्देख्या |
| ४९) केटी | ७६) गोसाई | १०३) तजले |
| ५०) दनेगुलु | ७७) किसि | १०४) कुसाथ्या |
| ५१) प्याथ | ७८) माखस्या | १०५) स्यामा |
| ५२) ल्वायनाबासु | ७९) गणेपति | १०६) स्वगमिखा |
| ५३) सिजख्व | ८०) तुईतुई | १०७) चव |
| ५४) तुइख्व | ८१) सिन्ताकले | १०८) ग्हितुनु |
| ५५) धुखो | ८२) खसु | १०९) दुगु |
| ५६) खाताख्व | ८३) बकै | ११०) जडाली |
| ५७) प्यासिख्व | ८४) बखाद्यो | १११) वमनु |
| ५८) ख्वाजू | ८५) गल्लु | ११२) पका |
| ५९) मुस्याजू | ८६) मातागलु | ११३) पच |
| ६०) छुस्याकी | ८७) लासिवा | ११४) तचाम्व |

| | | |
|---|---|---|
| ११५) घवत | १२३) कसिथ्वा | १३१) खाताख्व |
| ११६) घोछु | १२४) मग | |
| ११७) पुलाकी | १२५) खयरगुली | |
| ११८) त्वाती | १२६) पेन्तगो | |
| ११९) कबु | १२७) झाँग | |
| १२०) ग्वाछा | १२८) खायमली | |
| १२१) पं | १२९) लिगिलिगी | |
| १२२) झ्ालुसी | १३०) वंशमणी | |

उपर्युक्त थरका ज्यापू किसानीमा एक आपसमा वैवाहिक सम्बन्ध चल्दछ ।

माटोको काम गर्ने ज्यापूमा–

१] अवाले ( वा अवाल)

२] प्रजापति *

३] लाछि (ठिमीतिर)

यस बाहेक अन्य ज्यापू किसान पनि छन् । ती हुन्–

| | | |
|---|---|---|
| १ ] राजचल | १२] गोरा | २३] वेंजू |
| २ ] महा | १३] पालुकासी | २४] हिक्मो |
| ३ ] पोटो महा | १४] वारी | २५] स्वध द्यो |
| ४ ] हामो | १५] सिवो | २६] खिचाजू |
| ५ ] चौगुठी | १६] धन्छा | २७] सिकेमणी |
| ६ ] मुगुठी | १७] पालुबन्जा | २८] छ्वालू |
| ७ ] किलम्बू | १८] लोंहकर्मी | २९] कुचुमणी |
| ८ ] जोड्ने | १९] लोहला | ३०] उलक |
| ९ ] कजू | २०] तमखु | ३१] कासुका |
| १०] दथपुथे | २१] कत | ३२] शिल्पकार |
| ११] सैंजू | २२] फैंजू | |

---

✿ कर्माचार्य र वैद्य छ थरी श्रेष्ठमा पनि छन् ।



# ज्यापूको ऐतिहासिकता बारे अरू थाहा पाऔं !

.....अहीर गोपालको नेपालमा राज्य संचालन भइ रहेको समयमा सुनकोशी र ताम्राकोशीका किराती-हरू आई हमला गरी जिती वा भुवन सिंहलाई ढाली किराँत राज्य संचालन गरेको उल्लेख छ। ती किराती हुन् ज्यापू जाति। इतिहासमा ज्यापूको राज्यलाई किराँती नामले प्रसिद्ध भइरहेको छ।

(स्रोत– इनाप साप्ताहिक: २०४७ आश्विन ३, अंक ३७३, बर्ष ८)
–नेपालयागु प्रारम्भिक भूमि केपु दे (उद्‌भवस्थल)
–लिलाभक्त मुनकर्मी

"उपत्यका नछाड्नेहरू आदिबासी किराँतका टुक्रा नेवार जातिहरूमा जसलाई ज्यापू खेती किसान गरी खाने भनिन्छ, त्यसमा समावेश छन्।"

(किरातको नालिबेलि, –सम्माननीय नारदमुनि थुलुङ, पेज नं. १५९)

"नवौं शताब्दीको अन्त्यतिर उत्तर प्रदेशबाट वैसहरू आई यी लिच्छवीलाई जिति नयाँ राज्यको स्थापना गर्‍यो। यी नयाँ आउने वैसहरूले लिच्छवीहरूलाई राजकाजको कुनै काम नदिई कृषक अथवा ज्यापू गरि दिए। निर्बलको कारणले गर्दा लिच्छवीको रूपान्तर लाछी शब्द कायरको अर्थमा प्रयोग भयो।

(पेज नं. १२)

"समुद्रसम्म कीर्ति फैलाएको भन्ने यी लिच्छवी वा ज्यापूहरूको अवस्था मल्ल राजाहरूको पालामा पनि केही राम्रो भएन। ज्योतिर्मल्लले यिनीहरूलाई शुद्रमा राखिदिए।"

( स्व. इतिहास शिरोमणि बाबुरारम आचार्य
नेवाः, नेवाः भाय् व संस्कृति
पेज नं. , १५ )

# हाम्रो चासो

१) "ज्यापू" को अर्थ के हो ?

२) "ज्यापू" शब्द ऐतिहासिक हो कि होच्याउने ?

३) "ज्यापू" भन्नाले कुन कुन जातिलाई समावेश गरेको छ ?

४) "ज्यापू" लाई हिन्दू र बौद्ध धर्मावलम्बी भन्नुको खास ऐतिहासिक पक्ष के हो ?

५) "ज्यापूहरू" हलो जोर्दैन किन ?

६) "ज्यापू" आर्यन हो कि मंगोलियन ?

७) "ज्यापू" विशेषत: मंगोल अनुहारका देखिन्छ । मंगोल हुन् भने मंगोलमा आर्यन जस्तै शुद्र कहाँबाट आउँछ ?

८) ज्यापू जातिलाई शुद्र भनेर हिड्नुको ऐतिहासिक पक्ष के हो ? कसले, केको आधारमा बिभाजन गरे ? भाषा वंशावलीलाई आधार मानेर कामको आधारमा थर वा जातको विभाजन गर्ने हो भने कृषक कसरी शुद्र ? कृषि पेशा अंगाल्ने बाहुनलाई के भन्ने नि ? काम अनुसार थर विभाजन गरेको मान्ने हो भने महर्जनको अर्थ र खास काम के हो ? प्रजापतिको थर अनुसार काम के हो ?

९) सामाजिक जीवन चलाउने हरेक बस्तुमा स्वावलम्ब भएका ज्यापू कसले गर्दा र किन पिछडिएका हुन् । (आत्मनिर्भर भन्नुको अर्थ खेतीपाती, पशुपालन, माटाका भाँडा बनाउनु, काठको, ढुङ्गाको काम गर्नु, कपडा बन्नु आदि ।)

१०) ज्यापूलाई सानो जात भनेर हेप्ने केही कथित ठूला जातका नेवारहरूको मृत्यु भएमा ज्यापू जातिको सिगुठी (मृत्यु संस्कार गुठी) लाई सुम्पन्छ र उनीहरूको गुठीले दाह संस्कार गरि दिन्छ । यदि ज्यापू शुद्र हो भने त्यस्ता लाशलाई किन जलाउने जिम्मा दिन्छ ? यस्ता काम गर्नेलाई शुद्र भन्ने हो भने बाहुनलाई पनि यस्तो काम सुम्पिन्छ त्यसलाई किन शुद्र भनिएन ?

११) धार्मिक तथा सामाजिक लोक कथामा नाम उल्लेख भएका तथा काठमाडौं उपत्यकाको हरेक देवस्थल (प्रायस:) मा संलग्न तथा तलेजुमा देवीको पूजालाई भात पकाउने ज्यापू (सुवाल) र केही मन्दिरमा ज्यापू बाहेक अन्यले मुख्य पूजा गर्न नहुनेलाई कुन आधारले इतिहासकारहरू सत् शुद्र र असत् शुद्र भन्दै हिंड्ने गरेको छ । शुद्र भए उपत्यकाका धेरैजसो मन्दिरमा गजूर सम्म पुग्ने अधिकार किन, कसले दियो ?

---

नोट:– उपयुक्त प्रश्नको उत्तर भएमा तथा ज्यापूको ऐतिहासिकता सम्बन्धी अन्य कुनै जानकारी भएमा निम्न ठेगानामा पठाई सहयोग गरि दिनु होला । साथै आफ्नो नाम र ठेगाना पनि पठाउनु होला ।

ज्या. से. स.
पो. ब. नं ३१०५
काठमाडौं